● वर्ष १० ● अङ्क ७ ● फाल्गुण २०६५ ● पूर्णाङ्क ११५

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन: २२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## सञ्जीवनी विद्या विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौंमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**
**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

देश, काल, परिस्थितिले राम्रो मोड लिन सकिरहेको छैन। राजनैतिक परिवर्तनले पनि देशलाई स्पष्ट मार्ग दिन सकेको देखिँदैन। देश झन् अन्यौल, अस्थिरतामा गुज्रिरहेको छ। गुरु गोरखनाथको आशीर्वादले सिर्जिएको मुलुकको स्वाभिमानमाथि आज शंका उत्पन्न थालेको छ। नेपालीहरुको गर्व, नेपालीहरुको बहादुरी, नेपालीहरुको स्वाभिमानमाथि भाइरस लाग्न थालेको भान हुन्छ। देशको अस्तित्वको लागि मरी मेट्ने बहादुर शहीदहरु, वीरताको प्रदर्शन गरी स्वाभिमानी भएर बाँचेका पुर्खाहरुको योगदानलाई तिरस्कृत गरिएको छ।

देशको आफ्नै स्वाभिमानलाई ठेस पुग्ने गरी कुनै अभिव्यक्ति दिनु, कुनै सन्धि सम्झौता गर्नु, गैरजिम्मेवारी प्रदर्शन गर्नु आफैमा राष्ट्रघात हो भन्नुमा फरक नपर्ला। देशको माटो सम्झी प्रत्येक नेपाली नागरिकले मात्र होइन राजनैतिक नेताहरु, कर्मचारी, व्यवसायी, कलाकार प्रत्येकले कार्य गरी आफ्नो स्वाभिमान बचाउनेतर्फ अग्रसर हुनुपर्दछ। गोरक्ष भूमि नेपालको अस्मितामाथि कुनै आक्रमण हुन्छ भने प्रत्येक नेपाली जुर्मुराएर उठ्न सक्नुपर्दछ। आफ्नो पुर्खाले संरक्षित गरेको राष्ट्रभावको भावनालाई जागृत गर्नेतर्फ लाग्नुपर्दछ।

यसपालिको अङ्कलाई हामीले 'सञ्जीवनी विद्या विशेष'को रुपमा निकालेका छौँ। परापूर्व कालदेखि सञ्जीवनी विद्याको व्यापक खोज अनुसन्धान भएको पाइन्छ। हाम्रा पूर्वज ऋषिमुनिहरुले आफ्नो तपोबलले धेरै खोज अनुसन्धान गरेको पाइन्छ। सञ्जीवनी विद्या समय, कालखण्डअनुसार क्षमतावान् व्यक्तित्वको अभावमा प्रकाशमा आएको पाइँदैन। श्री श्री महायोगी गुरु गोरखनाथले आफ्नो प्रकटकालमा आफ्ना शिष्यमार्फत यो विद्यालाई पुनर्जीवित गर्नुभएको पाइन्छ। त्यस्तै परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले आफ्नो अवतरण कालमा सञ्जीवनी विद्याको बारेमा प्रकाश पारी पुनः आफ्ना शिष्यमार्फत यो विद्या समाजसमक्ष ल्याउनुभएको पाइन्छ। यसरी परमपूज्य सद्गुरुदेवले आज पनि यस विद्यालाई जीवन्तता दिई यसको वास्तविकतालाई समाजसमक्ष राखिदिनुभएको छ। आज पनि सञ्जीवनी शक्तिको सार्थकता त्यत्तिकै रहेको छ। यस अङ्कमा हामीले सञ्जीवनी शक्तिसम्बन्धी, सञ्जीवनी बूटीसम्बन्धी केही प्रसंगहरु दिने कोशिश गरेका छौँ। अन्य तपाईं हामीले पनि खोज अनुसन्धान गर्नुपर्ने आवश्यकता रहेको छ।

अन्त्यमा यो अङ्क निकाल्ने क्रममा भए गरेका गल्ती, कमी, कमजोरीहरुका लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष पनि क्षमा माग्दछौँ र आवश्यक सल्लाह सुझावको अपेक्षा गर्दछौँ।

अस्तु!

# अमरत्व प्रदाता

## दुर्लभ बूटी

# सञ्जीवनी

संसारमा अत्यन्तै राम्रा र गुणकारी वनस्पति तथा औषधिहरू पाइन्छन् तर दुर्भाग्यवश हामीले ती औषधिहरूलाई भुल्दै गइरहेका छौं । एकपटक आधुनिक चिकित्साशास्त्रमाथि विचार गरेर हेरौं । सर्जरीको क्षेत्रमा त चिकित्सा विज्ञानले धेरै उन्नति गरिसकेको छ तर काय चिकित्सा (Internal Medicine) मा कुनै प्रगति नै छैन भने पनि हुन्छ। विज्ञानको उन्नतिसँगसँगै हामीले आयुर्वेदलाई झण्डै-झण्डै बिर्सिसकेका छौं ।

### चौंसठ्ठी दिव्य औषधिहरू

कैयौं प्राचीन वैद्यक ग्रन्थहरूमा चौंसठ्ठी दिव्य औषधिहरूको बारेमा उल्लेख भएको पाइन्छ । ती सबै ग्रन्थहरूमा एउटा कुरा भने स्पष्टरूपमा स्वीकार गरिएको छ कि यी दिव्य औषधिहरूमा सञ्जीवनी बूटी वा सञ्जीवनी जडी आफैमा अद्वितीय छ ।

आयुर्वेदको विशिष्ट ग्रन्थ सुश्रुत-संहितामा बताइएको छ–

**अणिमा, गरिमा, लघिमा प्राप्तिः प्राकाम्य माहिता ।**
**इशित्वं च वशित्वं च तथा कामावसायिता ॥**

अर्थात् संसारमा आठ ऐश्वर्य हुन्छन् जसलाई प्राप्त गरेर व्यक्ति देव श्रेणीमा पुग्न सक्दछ । समस्त जडिबूटीहरूमध्ये एक मात्र सञ्जीवनी बूटी नै यति महत्त्वपूर्ण छ जसले उपरोक्त आठै प्रकारका ऐश्वर्य प्रदान गर्न सक्दछ ।

यसका विशेषताहरूका बारेमा प्रसिद्ध रसायनज्ञ नागार्जुनले सम्मानपूर्वक बताएका थिए कि यस जडको प्रयोगबाट मानिसमा कुनै पनि विषको प्रभाव पर्दैन । यदि यसलाई महसँग घोटेर नित्य एक तोला सेवन गर्ने हो मात्र तीस दिनमा नै मानिसको कायाकल्प हुन्छ, मांसपेशी

सुदृढ भएर शरीरको पुराना छाला उत्रेर नयाँ गुलाबी छाला शरीरमा चढ्दछ, नेत्रज्योति बढ्दछ तथा उसको श्रवणशक्ति पूर्णरूपमा सक्षम हुन जान्छ र जीवनमा विशेष प्रकारको व्यक्तित्व, तेजस्विता तथा निखार आउँछ ।

नागार्जुनका प्रसिद्ध शिष्य 'सोमश्रुवा'ले आफ्नो पूरा जीवन यसै जडिबूटीका विभिन्न प्रयोगहरूमा बिताएका थिए । जीवनको अन्तिम वर्षमा उनले आफ्नो प्रसिद्ध ग्रन्थमा लेखे– 'आकाशका तारा गन्न सकिएला तर यस जडीको प्रभाव तथा महत्त्वलाई गन्न सकिन्न ।' सोमश्रुवाले व्यक्तिगत तवरमा यी सबै प्रयोगहरूलाई सिद्ध गरे र उनले बताएका थिए कि जमीनबाट माथि उठेर हावामा स्थिर हुन सम्भव छ । ऊ अधरमा हिंड्न सक्छ र वायुवेगबाट एक स्थानबाट अर्को स्थानमा जाने क्षमता विकास गर्न सक्दछ । उनले बताए कि यदि यसमाथि केही अरू प्रयोग गर्ने मौका मलाई प्राप्त हुन्छ भने म निश्चय भन्न सक्दछु कि यसको प्रयोगबाट व्यक्ति अजर अमर हुन सक्दछ, मृत्यु मानिसको नियन्त्रणमा हुन सक्छ ।

आयुर्वेदका विभिन्न ग्रन्थहरूमा यस जडीका बेग्लाबेग्लै नाम बताएको पाइन्छ जसमा सोम, महासोम, चन्द्रमा, अनुमान, रजतप्रभ, कनियान, श्वेतान, कनकप्रभा, प्रतापवान, करवीर, स्वयंप्रभ, गायत्र, पावत, जागत, साकर आदि छन् ।

## काठको टुक्राबाट प्रकाशको प्रस्फुटन

गुजरातका प्रसिद्ध वैद्य हीरजी भाइले 'सञ्जीवनी' नामक एउटा पुस्तक लेखेका थिए जुन सन् १८२७ मा प्रकाशित भएको थियो । पुस्तक गुजराती भाषामा थियो । यसमा उनले सञ्जीवनीसँग सम्बन्धित अनुसन्धानको विवरण दिएका थिए । उनको पूरै जीवन सञ्जीवनी जडीको खोजीमा नै व्यतीत भएको थियो । जीवनको अन्तिम समयमा उनले मल्लिकार्जुन पर्वतमा यो जडिबूटी प्राप्त गरेका थिए ।

उनले लेखेका छन्– यो सामान्य काठजस्तै हुन्छ तर यस काठको टुक्राबाट प्रकाशको किरण निस्किरहन्छ । त्यसैले दिनको उज्यालोमा यसलाई प्राप्त गर्न सामान्यत: सम्भव छैन । तर राति आफ्नो चमकका कारण यसलाई सजिलैसँग चिन्न सकिन्छ किनकि अँध्यारोमा यो रेडियमजस्तै चम्किन्छ । सञ्जीवनीको एक टुक्राबाट यति धेरै प्रकाश निस्कन्छ जसको नजिक बसेर मानिसले सजिलैसँग लेखपढ गर्न सक्दछ ।

पुस्तक पढिसकेपछि मलाई सन् १९६८ मा गोरखपुरमा भएको प्रदर्शनीको स्मरण भयो जसमा प्रसिद्ध वैद्य रमेशचन्द्रले सञ्जीवनी बूटीको प्रदर्शन गरेका थिए । प्रदर्शनीमा राखिएका सञ्जीवनीका टुक्राहरूबाट निरन्तर प्रकाश निस्किरहेको थियो ।

पोहोर साल मलाई गोकुल जाने मौका मिलेको थियो । गोकुलमा म बरसानातर्फ गइरहेको थिएँ, अकस्मात् आफ्ना गुरु भाइसँग भेट भयो । २५ वर्ष अगाडि उनीसँग भेट भएको थियो । त्यसपछि भेट भएको थिएन किनकि म गृहस्थमा फँसेको थिएँ । उनी घुमन्ते जोगी थिए । कुराकानीको सिलसिलामा सञ्जीवनीको सन्दर्भ उठ्नासाथ उनले भने– 'मसँग सञ्जीवनी बूटी छ,

**यो सामान्य काठजस्तै हुन्छ तर यस काठको टुक्राबाट प्रकाशको किरण निस्किरहन्छ । त्यसैले दिनको उज्यालोमा यसलाई प्राप्त गर्न सामान्यतः सम्भव छैन । तर राति आफ्नो चमकका कारण यसलाई सजिलैसँग चिन्न सकिन्छ किनकि अँध्यारोमा यो रेडियमजस्तै चम्किन्छ ।**

हेर्नुहुन्छ ?' भन्दाभन्दै उनले आफ्नो झोलाबाट हत्केलाभरिको काठको टुक्रा बाहिर निकालेर मेरो हातमा राख्दै भने– 'यही सञ्जीवनी बूटी हो ।'

म अचानक एवं अप्रत्याशितरूपबाट प्राप्त सञ्जीवनीलाई देखेर हतप्रभजस्तै भएँ, मैले सोधेँ– 'के यसबाट प्रकाश निस्कन्छ ?', 'राति यो विशेषरूपमा चम्किन्छ ?' उत्तरमा उनले भने– ' हो, मैले यसलाई अमावस्याको राति भयानक सह्याद्रि पर्वत मालाको भीमशंकरमा रहेको पहाडबाट प्राप्त गरेको थिएँ । यसबाट निस्कने प्रकाश किरणलाई तपाईं स्वयंले राति देख्न सक्नुहुनेछ ।'

म दिनभरि उनीसँगै रहें । राति उनी जहाँ बसेका थिए त्यहीं गएर म पनि बसेँ । संयोगवश त्यो अँधेरी रात थियो । तैपनि झ्यालहरूमा मैले पर्दा लगाएको थिएँ । कोठामा निस्पट्ट अँध्यारो थियो । त्यस काठको टुक्रालाई उनले पहिले पानीमा भिजाए, पछि कोठाको बीच भागमा राखे । केही छिनपछि नै काठबाट प्रकाश निस्कन लाग्यो । करिब दस मिनेटपछि त पूरै काठ रेडियमजस्तै चम्किन लाग्यो ।

म रातभरि निदाउन सकिन, त्यसबाट निस्किरहेको प्रकाशपुञ्जलाई हेर्दै बसिरहें । बिहान भएपछि त्यो वनस्पतिले प्रकाश दिन छोड्यो ।

मेरा गुरुभाइले यसको प्राप्तिको सम्बन्धमा विस्तारपूर्वक बताउँदै भने– 'यो वनस्पति हिमालय पर्वत शृङ्खलाको कश्मीरस्थित क्षुद्रक मानसरोवरनजिक सिन्धु नदीको उद्गम तथा मल्लिकार्जुन पर्वतमा प्राप्त हुन्छ । यसबाहेक देवगिरि, सह्याद्रि तथा विन्ध्याचल पर्वतमा पनि यो वनस्पति प्राप्त हुन्छ । मैले यसलाई जम्मूनजिक पनि देखेको छु ।'

सञ्जीवनीको बारेमा उनलाई सविस्तार जानकारी थियो । उनले भने– यसको बोट करिब चार फिटको हुन्छ । प्रत्येक शुक्ल पक्षको प्रतिपदामा यसमा एउटा पात लाग्दछ, द्वितीयामा दुई, तृतीयामा तीन, यसैप्रकार बढ्दै बढ्दै पूर्णिमामा पन्ध्रवटा पात निस्कन्छन् । यसपछि कृष्णपक्षको प्रतिपदादेखि क्रमशः एउटा-एउटा पात झर्दै अमावस्यासम्म आइपुग्दा बोट सुकेको काठमा परिवर्तित हुन्छ ।

उनले यसको प्रभावको बारेमा भने– 'म स्वयंको अनुभवअनुसार यसको प्रयोगबाट निम्न प्रभाव सामान्यतः सम्पन्न हुन्छन्'–

–यदि सञ्जीवनीको जराको चूर्ण नित्य एक तोला गाईको दूधसँग तीस दिनसम्म सेवन गर्ने हो भने कुनै पनि प्रकारको क्यान्सर निर्मूल हुन्छ, क्यान्सरको अस्तित्व समाप्त हुन्छ । मैले साठी-सत्तरी मानिसहरूमा यसको प्रयोग गरिसकेको छु ।

–तीस दिनसम्म यसको चूर्ण महसँग सेवन गर्ने हो भने व्यक्तिको कायाकल्प हुन्छ ।

–यसलाई 'पुत्रदा' भनिएको छ । सञ्जीवनीको काठको चूर्णलाई तीन दिनसम्म केवल पानीसँग सेवन गर्ने हो भने व्यक्तिको नपुंसकता हट्दछ ।

यदि वीर्यमा शुक्राणु छैन भने तीन दिनको सेवनबाट शुक्राणु बन्छ र व्यक्ति सन्तान जन्माउन सक्षम हुन्छ । यदि कुनै स्त्रीले रजस्वलाको समयमा यसको सेवन गर्दछिन् भने दस दिनभित्र नै गर्भ रहन्छ र ठीक समयमा पुत्र प्राप्ति हुन्छ । यसको प्रयोगबाट गर्भाशयसम्बन्धी सम्पूर्ण दोष र रोग समाप्त हुन्छन् ।

–यदि यसको धूलोलाई दहीमा मिलाएर सेवन गर्ने हो भने एक हप्ताभित्र सन्धिवात, अल्काई (बवासीर) आदि रोग समाप्त हुन जान्छन् । यसको प्रयोगबाट बोसो लाग्ने समस्याको समाधान हुन्छ ।

–यदि यसको चूर्णलाई दूधमा मिलाएर शरीरमा लेप गर्ने हो भने सम्पूर्ण शरीर गोरो तथा स्वस्थ हुन जान्छ, अनुहारको कान्ति तथा आभा कैयौँ गुणा बढ्न जान्छ, शरीर वा अनुहारमा भएका दाग, पोतो, चाउरीपन, मुसा, कोठी वा अन्य केही छ भने ती सबै हट्दछन् ।

–'अणिमा प्रयोग'द्वारा यस जडीको प्रभावबाट हावामा स्थिर हुन सकिन्छ र लघिमा प्रयोगद्वारा एक क्षणमा नै सशरीर एक ठाउँबाट अर्को ठाउँमा जान सम्भव हुन्छ ।

टाइफाइड, वात रोग, मानसिक रोग, ज्वरो, भूत-प्रेत बाधा, दृष्टिदोष, टाउको दुख्ने आदि कुनै पनि शारीरिक रोगको निवृत्तिमा यो अद्वितीय छ । त्यसैले यसलाई एउटा दिव्य औषधिको रूपमा लिइन्छ ।

उनको मुखबाट यी सबै कुरा सुनेर म चकित भइरहेको थिएँ । फर्किने बेलामा उनले यो दिव्य औषधि मलाई उपहारस्वरूप दिएर भने– 'यदि अवसर मिलेमा जङ्गलमा गएर यस जडीलाई आफैले नियाल्नुहोस् । तब तपाईंलाई विश्वास हुनेछ कि यो कति महत्त्वपूर्ण र दिव्य जडी हो ।'

यस्तो अवसर धेरै वर्षपछि पूज्य गुरुदेव श्रीमालीज्यूसित भएको केदारनाथको यात्रापश्चात् प्राप्त भयो । यो मेरो सौभाग्य थियो कि उहाँले उत्तराखण्डको चार धाममध्ये एक केदारनाथको यात्राका लागि मलाई पत्नीसहित यात्रा गर्ने स्वीकृति दिनुभयो ।

यो यात्रा आफैमा अत्यन्तै महत्त्वपूर्ण र मेरो सम्पूर्ण जीवनका श्रेष्ठतम यात्राहरूमध्ये एक थियो । श्रीमालीज्यूसँगको यात्राको आनन्द नै बेग्लै हुन्थ्यो । यात्रामा गुरुदेवलगायत उहाँकी पत्नी, दुई छोराहरू हुनुहुन्थ्यो, साथसाथै म र मेरी पत्नी पनि थियौँ । बम्बईका नम्बूरदरी भाइ तथा दिल्लीका गोयल साहब पनि थिए ।

गौरी कुण्डभन्दा अगाडिका सबै बाटोहरू हिँडेरै पार गर्नु थियो । बाटोमा सञ्जीवनीको प्रसङ्ग उठ्नासाथ उहाँले बताउनु भयो– 'मैले यस जडीमाथि धेरै प्रयोग गरिसकेको छु । यदि तिमीमा केदारनाथभन्दा पर वासुकी तालसम्म जाने हिम्मत छ भने सञ्जीवनीका कैयौँ बोट देख्न सक्नेछौ ।'

सञ्जीवनीको बारेमा बताउँदै उहाँले भन्नुभयो कि यसको विवरण त रामायणमा पनि आउँछ । जब मेघनाथले शक्ति वाणबाट लक्ष्मणलाई मूर्छित बनाए तब श्रीराम दुःखी भएर विलाप गर्न लाग्नुभयो । यस्तो परिस्थितिमा सुषेण वैद्यलाई बोलाइयो र उनको परामर्शमा हनुमान् सञ्जीवनी लिनका लागि हिमालय पर्वतमा जानुभयो ।

उहाँले भन्नुभयो, यदि यसको पातको रस मृतकको मुखमा हालिदिने हो भने निश्चितरूपमा त्यो बाँचेर उठ्दछ । पातलाई घोटेर शरीरमा भएका घाउहरूमा लगाइदिएमा त केही मिनेटमा नै घाउ पुरिएर ठीक हुन्छ र त्यहाँ कुनै पनि प्रकारको खत रहँदैन ।'

## वासुकी तालको यात्रा

यात्रीहरूले धेरै प्रयत्न गरेर गौरीकुण्डभन्दा पर केदारनाथसम्मको यात्रा भने गर्न सक्लान् तर यसभन्दा अगाडि बढ्नु त खतरापूर्ण हुन्छ। तैपनि जसलाई यस दुर्गम बाटोको बारेमा थाहा छ, उसले यसभन्दा पनि पर गएर प्रकृतिको वास्तविक सौन्दर्यको रसास्वादन गर्न सक्दछ ।

हामी बिहान करिब नौ बजे केदारनाथसम्म पुग्यौँ । त्यहाँको तातोपानीको कुण्डमा स्नान आदि गरेर भगवान् केदारनाथलाई जल चढाएपछि हामी फेरि अगाडि बढ्यौँ। हाम्रो उद्देश्य साँझसम्म फर्किने थियो । लाखौँमा एकाध यात्रीले मात्र केदारनाथभन्दा अगाडि जाने साहस गर्दछ किनकि यो बाटो हिउँले ढाकिएको हुन्छ, साथसाथै बेलाबेला हिउँकै आँधी पनि आउँछ र बाटो देखिनै बन्द हुन्छ ।

केदारनाथभन्दा अगाडि गंगाको घाटीमा पुगेर हामीले केहीबेर विश्राम गर्‍यौँ । वास्तवमा नै यहाँबाट अद्वितीय प्रकृति देखिन थाल्दछ । यस घाटीको सरोवरमा सुन्दर ब्रह्मकमल फुलेको देखिन्छ । यस्तो लाग्दछ– यो पूरै घाटी नै ब्रह्मकमलबाट आच्छादित छ... यहाँबाट बायाँतर्फ हामी अगाडि बढ्न लाग्यौँ, चिसो बढिसकेको थियो... त्यहाँ न कुनै बाटो थियो, न त कुनै पदचाप नै तर सद्गुरुदेव निश्चिन्तताका साथ अघि बढिरहनुभएको थियो मानौँ उहाँलाई यस स्थानबारे सबैकुरा थाहा छ। त्यस स्थानको उचाइ धेरै भएकोले हिँड्दा सास फेर्न गाह्रो भइरहेको थियो। केही बेरपछि हामीले धार स्थान देख्यौँ जुन आफैमा अद्वितीय थियो। त्यहाँबाट एकैछिन बायाँतिर अघि बढेपछि अद्वितीय वासुकी ताल दृष्टिगोचर भयो जसको निलो मखमली पानी चम्किरहेको थियो । चारैतर्फ हरियो लेकाली घाँस देखिन्थ्यो, घाँसको बीचबीचमा हजारौँ

लाखौँ ब्रह्मकमल फुलिरहेका थिए र तालनजिकै सञ्जीवनीका थुप्रै कलिला बिरुवाहरू थिए । तर दिउँसो भएकोले तिनीहरूको चमक देखिएको थिएन । अतः मैले एउटा बोटको डाँठसँगसँगै आफैलाई पनि कालो कम्बलले पूर्णरूपमा ढाकेँ । त्यसपछि बोटको डाँठबाट प्रकाश निस्किरहेको अनुभव भयो ।

समय कम थियो, हामी साँझ पर्नुभन्दा अगाडि नै तल झर्नुपर्ने थियो। त्यसैले हामीले केही बोट र करिब दुई सय पात टिपेर आफूसित राख्यौँ । धेरै गह्रौँ बोक्न नसकिने भएर हामीले थोरै बोट मात्रै लैजान सक्यौँ ।

यो बोट सोमवर्गको हो, यसलाई संस्कृतमा तृण ज्योति वा दिव्यौषधि भनिन्छ । यसको डाँठ सेतो हुन्छ र पातहरू साना तथा किनारामा आराको जस्तै दाँत भएका हुन्छन् । पात टिप्दा सेतो खालको चोप निस्कन्छ । पात स्वादमा थोरै तीतो हुन्छ । यसको डाँठ हातको नाडी समान मोटो हुन्छ ।

यसको डाँठलाई काटेर घर लगेर पानीमा राख्ने हो भने केही वर्षसम्म यसमा पातहरू पलाइरहन्छन् तथा डाँठ भिजायौँ भने त्यसबाट प्रकाश निस्किरहन्छ । यदि साँझ यसको पात टिप्यौँ भने भोलिपल्ट बिहान त्यस ठाउँमा नयाँ पातहरू पलाउँछन् । यदि यसको पातलाई पिँधेर निकालिएको रस दूधमा मिलाइदिने हो भने त्यो दूध केही रातो रङ्गको हुन्छ । रातो हुनासाथ त्यो दूध तुरुन्त पिउनु पर्दछ । यसको प्रभावबाट व्यक्ति कामदेवसमान सुन्दर, स्वस्थ, यौवनवान एवं तेजस्वी बन्दछ ।

– योगी ज्ञानानन्द ('तंत्रः गोपनीय रहस्यमय सिद्धियां'बाट)

सञ्जीवनी बूटीलाई वैज्ञानिक नाम *Selaginella bryopteris* दिइएको छ ।

### भारतमा भएको सञ्जीवनीको खोज

द्रोणगिरी पर्वतमा करिब १५,००० फिटको उचाइमा खोज्दा सञ्जीवनीका दुईवटा बोटहरू फेला पारेको तथ्य आचार्य बालकृष्णले भारतको हिन्दूस्तान टाइम्सलाई बताउनुभएको थियो ।

भारतको NDTV न्यूज च्यानलले आफ्नो प्रसारणमा भनेको थियो– भारतीय स्वास्थ्य विभागले सञ्जीवनी बूटीमा थुप्रै अनुसन्धान गरिसकेको राष्ट्रिय वनस्पति अनुसन्धान संस्थासँग यसबारेमा परामर्श गरिरहेको छ । कैयौँ दावीहरूका बीच, बूटीसम्बन्धी सत्यतथ्य पत्ता लगाउन प्रयासरत स्वास्थ्य विभाग आफ्नो यस अनुसन्धान प्रयासलाई जारी राख्ने कुरामा भने निश्चित देखिँदैन । जय गुरुदेव !

# सञ्जीवनी विद्याबाट करभञ्जन नारायणको अवतार

एक दिन गुरु मत्स्येन्द्रनाथ भिक्षाटनका लागि गाउँमा जानुभएको थियो र गुरु गोरखनाथ सञ्जीवनी विद्याको पाठ गरिरहनु भएको थियो। त्यसै समय गाउँका केटाकेटीहरू खेल्दै गुरु गोरखनाथ कहाँ आइपुगे। उनीहरूले खेलौना बनाउन हातमा गिलो माटो पनि लिएर आएका थिए।

बालकहरूले गुरु गोरखनाथनजिक पुगेर भने– साधु बाबा ! हजूरले यस माटोबाट हाम्रो लागि एउटा गाडी बनाइदिनुहोस्। गुरु गोरखनाथले मलाई गाडी बनाउन आउँदैन भनेर टारिदिनुभयो। त्यसपछि तिनीहरूले जसोतसो एउटा गाडी तयार गरे गाडी चलाउने (ड्राइभर) भने बनाउन सकेनन्। उनीहरूले फेरि गुरु गोरखनाथसँग भने– हे बाबा ! गाडी त हामीले बनायौँ तर ड्राइभर बनाउन सकेनौँ। त्यसैले हजूरले हाम्रो लागि ड्राइभर बनाइदिनुहोस्।

गुरु गोरखनाथलाई बच्चाहरूप्रति दया आयो। उहाँले उक्त गिलो माटो लिएर ड्राइभर बनाउन आरम्भ गर्नुभयो। ड्राइभरलाई बनाउने समयमा पनि गुरु गोरखनाथले सञ्जीवनी मन्त्रको जप गरिरहनु भएको थियो। अतः जसै ड्राइभर बनेर तयार भयो, त्यो केवल माटोको खेलौना नभएर सजीव बालक बन्यो। उसको शरीरमा हड्डी, छाला, मासु तथा प्राण सबै कुरा थियो। दैवेच्छाबाट त्यस खेलौना ड्राइभरमा करभंजन नारायणको प्रवेश हुन गएको थियो।

माटाको खेलौनालाई सजीव भएको देखेर बालकहरू सबै 'भूत-भूत' भनेर भागे। गुरु गोरखनाथ स्वयंले पनि यस चमत्कारको विषयमा केही बुझ्न सक्नुभएन। उहाँले भरखर बनेको बालकलाई आफूसँगै बसाउनुभयो।

बच्चाहरू 'भूत-भूत' भनेर चिच्याउँदै गाउँमा पुगे। गाउँको नजिकै बस्नुभएका एकजना योगीले माटोबाट एउटा जीवित बालकलाई उत्पन्न गर्नुभयो भन्ने कुरा गाउँभरि फैलियो। गाउँमा भिक्षाटनका लागि जानुभएका गुरु मत्स्येन्द्रनाथको कानमा पनि यो कुरा पुग्यो। उहाँले ध्यान दृष्टिले हेर्दा करभंजन नारायणले अवतार लिनुभएको थाहा पाउनुभयो। उहाँ फर्केर गुरु गोरखनाथसमीप पुग्नुभयो। गुरु गोरखनाथले सम्पूर्ण घटना भन्नुभयो। त्यसलाई सुनेर गुरु मत्स्येन्द्रनाथले भन्नुभयो– हे पुत्र ! तिमीले खेलौना बनाउने समयमा सञ्जीवनी मन्त्रको पाठ गरिरहेका थियौ। यसैले तिम्रो लागि यो करभंजन नारायणको अवतार भएको छ। यति भनेर गुरु मत्स्येन्द्रनाथले त्यस बालकको शिरमा हात राखेर आशीर्वाद दिनुभयो। उहाँले बालकको नाम गहिनीनाथ राख्नुभयो।

जय गुरुदेव !

**तान्त्रिक साधना**
**तान्त्रिक ध्यान**
**मानव जीवनको**
**वास्तविक ज्ञान।**

# सञ्जीवनी मंत्रका लागि कठोर तपस्या

*(असुरहरूका गुरु शुक्राचार्यले भगवान् शिवबाट मृतसञ्जीवनी मन्त्र प्राप्त गरेको विषयमा विवाद नरहे पनि विद्या प्राप्तिको सन्दर्भमा मतैक्यता देखिँदैन । यस सन्दर्भमा उनलाई कतै ऋषि अंगिराबाट रुष्ट अन्य गुरु खोज्दै हिँड्ने क्रममा गौतम ऋषिको सल्लाह बमोजिम भगवान् शिवको भक्ति गर्न थालेको र भगवान् शिव प्रसन्न भएर उनलाई मृतसञ्जीवनी विद्या हस्तान्तरण गर्नुभएको कुरा उल्लेख छ भने कुनै कुनै ठाउँमा देवराज इन्द्रसँगको युद्धमा आफ्नो सेना सधैँ पराजित हुने भएर कायल भएपछि युद्धमा मरेका सेनालाई पुनर्जीवन दिन भगवान् शिवसँग मृतसञ्जीवनी मन्त्रको लागि तपस्या गरेको उल्लेख पाइन्छ । तपस्याको अवस्था पनि कतै उल्टो झुण्डिएर गरेको त कतै प्रार्थना मात्र गरेको चित्रण पाइन्छ । यस प्रसंगलाई प्रकाशित गर्ने क्रममा हामीले यससम्बन्धी दुईवटा चित्रणलाई यहाँ प्रकाशित गरेका छौं ।)*

दानवहरूका राजा हयग्रीवको मृत्युपश्चात् अन्तिम संस्कार भइरहेको थियो । त्यसैबेला हयग्रीवको स्थान कसले लिने भन्ने सम्बन्धमा कालकेतु र हर्षलबीच युद्ध भयो । हर्षलले युद्ध हारे र उनी गएर देवराज इन्द्रबाट अपमानित भएका शुक्राचार्यकहाँ गए । कालकेतुले इन्द्रविरुद्ध युद्ध गरे तर उनी हार्नुपर्‍यो । इन्द्र आफू विजयी भएकोले गर्वित थिए ।

कालकेतु र हर्षल दुवै शुक्राचार्यको शरणमा पुगे । शुक्राचार्य मृतलाई पुन: जियाउन सकियोस् भनेर भगवान् शिवकहाँ सञ्जीवनी मन्त्रका लागि गए । इन्द्रले पनि सञ्जीवनी मन्त्रका लागि भगवान् शिवसँग प्रार्थना गरे । भगवान् शिवले मन्त्र प्राप्तिको लागि भोकभोकै उल्टो झुण्डिएर एक वर्षसम्म तपस्या गर्नुपर्ने बताउनुभयो । इन्द्रले यस्तो तपस्यालाई सम्भव देखेनन् तर शुक्राचार्यको तपस्या अघि बढ्यो । कालकेतु र हर्षलले जीवनको नै खतरा हुने देखेर शुक्राचार्यलाई तपस्या अघि नबढाउन आग्रह गरे । तर उनले मानेनन् । उनले आफूलाई रूखमा उल्टो झुण्ड्याए र धूवाँ मुखमा आउने गरी तलतिर आगो सल्काए । आफूले चाहेको कुरा पाउन शुक्राचार्यले गरेको कठोर तपस्या देखेर भगवान् विष्णु उनको प्रशंसा नगरीकन बस्न सक्नुभएन ।

एकदिन नारद इन्द्र कहाँ आए । इन्द्रले त शुक्राचार्यलाई तपस्यामा सफल नहुने ठानेका थिए । नारदले शुक्राचार्यको दृढतापूर्वक भइरहेको तपस्याको बारेमा इन्द्रलाई बताए । शुक्राचार्यले भगवान् शिवबाट मन्त्र पाउने कुरा पक्कापक्की भएको कुरा पनि नारदले इन्द्रलाई बताएपछि उनी साह्रै डराए ।

यसबीच शुक्राचार्यकी आमा आएर उनलाई सफलताका लागि आशीर्वाद दिइन् । त्यो देखेर भगवान् विष्णु अति प्रसन्न हुनुभयो । आमाछोराको सम्बन्ध पूर्ण सन्तुष्टि र पूर्णताको द्योतक हो भन्ने भगवान् विष्णुले महसुस गर्नुभयो । उहाँले यस्ती आमालाई अभिवादन गर्नुभयो ।

इन्द्रले आत्तिएर तीनवटी अप्सरालाई शुक्राचार्यको तपस्यालाई खण्डित गर्न उनीकहाँ पठाउन खोज्दा शुक्राचार्यको श्रापको डरले उनीहरूले इन्द्रको कुरा मानेनन् । त्यसैबेला इन्द्रकी छोरी जयन्ती आएर भनिन् कि स्त्रीलाई पुरुषको कमजोरीको रूपमा प्रयोग गरिनुहुन्न किनभने स्त्रीले पुरुषलाई शक्ति प्रदान गर्दछिन् । उनले स्त्रीलाई मनोरञ्जनको वस्तुको रूपमा प्रयोग गर्न नहुने तर्क अघि सारिन् । यद्यपि अन्तमा उनले आफैलाई शुक्राचार्यको तपस्या भङ्ग गर्ने कार्यका लागि छानिन् ।

जयन्ती आफू बेग्लै रूपमा प्रस्तुत भएर तपस्वी शुक्राचार्यकहाँ गइन् । उनले बलिरहेको आगोमा खुर्सानी हालिन् जसबाट आगोबाट निस्केको धूवाँ असहनीय पोल्ने भयो । शुक्राचार्यलाई सास लिन पनि अप्ठेरो हुन गयो । तर शुक्राचार्य आफ्नो तपस्यामा लीन भइरहे ।

असहनीय पीरो धूवाँको पीडा बढ्दै गइरहेको थियो र शुक्राचार्य पीडालाई लगातार सहेर आफ्नो दृढतामा अडिग थिए । उनको आँखा, मुख र नाकबाट रगत बग्न लाग्यो । यसरी पीडा खपेर पनि आफ्नो तपस्यामा अडिग शुक्राचार्यको दृढता देखेर जयन्ती छक्क परिन् । उनलाई अत्यन्तै माया पनि लाग्यो । त्यसपछि उनले आगो त्यहाँबाट हटाउन खोजिन् । तर कालकेतु र हर्षलले दिएनन् किनभने शुक्राचार्यले ती दुवैलाई उनलाई यस्तो गर्नबाट रोक्न अह्राएका थिए । जयन्ती अति नै व्यथित भइन् । उनले आफ्नो गल्तीलाई महसुस गरिन् र भगवान् शिवसँग शुक्राचार्यको जीवन बचाइदिन प्रार्थना गरिन् ।

भगवान् शिवले तुरुन्तै शुक्राचार्यलाई त्यस अवस्थाबाट मुक्त गर्नुभयो र भन्नुभयो कि शुक्राचार्य सञ्जीवनी मन्त्रका लागि योग्य उत्तराधिकारी हुन् । भगवान् शिवले शुक्राचार्यलाई सञ्जीवनी मन्त्र दिनुभयो । सञ्जीवनी मन्त्र पाएर शुक्राचार्य अत्यन्तै प्रसन्न भए । उनले परीक्षणका लागि भनेर हर्षललाई मारे र सञ्जीवनी मन्त्रद्वारा उनलाई जियाए ।

सफलताको खुशीयालीको दौरानमा जयन्तीले आफ्नो भूलको प्रायश्चित्त शुक्राचार्य सामु गरिन् । अपराधबोधबाट संतप्त जयन्तीले एउटी श्रीमतीको रूपमा जीवनभरि शुक्राचार्यको सेवा गर्ने निवेदन पनि उनीसमक्ष गरिन् । तर शुक्राचार्यले दानवको देवपुत्रीसँग विवाह हुन नसक्ने

बताए। यो सुनेर जयन्तीले भनिन् कि यो विवाह देवपुत्री र दानवबीच नभएर पुरुष र स्त्रीबीचको हो। उनले आफ्नो प्रस्ताव स्वीकार्न शुक्राचार्यसँग अनुनय गरिन्। शुक्राचार्य द्विविधामा परे। शुक्राचार्यले जयन्तीको अवस्था दर्शाउँदै आफू उनका बुबा इन्द्रसँग युद्ध गर्न गइरहेको बताए। जयन्तीले आफूले गरेको अपराध केवल बुबाको प्रेमको लागि मात्र गरेको बताएपछि शुक्राचार्यले उनको प्रस्ताव स्वीकारे।

इन्द्र यस विवाहको पक्षमा थिएनन्। तर इन्द्रकी धर्मपत्नी भने यसको पक्षमा थिइन्। उनको तर्क थियो कि इन्द्रको विवाह पनि दानवपुत्री (आफू) सित भएको थियो। उनले जोडदाररूपमा भनिन् कि दानव र देवपुत्रीबीचको विवाहमा कुनै गल्ती छैन। यो सुनेर इन्द्रको शिर निहुरियो।

शुक्राचार्यले युद्धको घोषणा गरे। इन्द्रबाट पनि युद्धको घोषणा भएपछि जयन्तीले सम्झौताका लागि दुवै पक्षलाई अनुरोध गरिन्। शुक्राचार्य सम्झौताको विरुद्धमा थिए। युद्धमा जयन्ती शुक्राचार्यको पक्षमा उभिइन् किनकि उनी उनका पतिदेव थिए।

युद्ध शुरु भयो। इन्द्रको सेनाले दानव सेनालाई जति मारे पनि शुक्राचार्यले सञ्जीवनी मन्त्रद्वारा उनीहरूलाई पुनर्जीवित तुल्याउँथे। युद्धमा इन्द्रले आफूलाई असक्षम भएको महसुस गरेर आफ्ना सैनिकहरूका साथ मैदानबाट भागे। दानवहरूले युद्ध जिते। यसरी शुक्राचार्यको भीषण र दृढ तपस्याले गर्दा उनलाई सञ्जीवनी मन्त्र प्राप्त भयो र युद्धमा दानवहरूको जीत भयो। तपस्यालाई सम्भव नदेख्ने नकारात्मक मनोवृत्तिले गर्दा युद्धमा इन्द्रले हार्नुपऱ्यो। जय गुरुदेव !

महर्षि अंगिरा तथा महर्षि भृगु दृढ इच्छाशक्ति भएका महान् व्यक्तित्वहरू हुनुहुन्छ। यी दुवै ऋषिहरूबीच आफ्ना छोराहरूको व्रतबन्ध गरेपछि त्यसपछिको संस्कार दिने, विद्या पढाउने बारेमा विचार विमर्श भयो। दुईजना महर्षिमध्ये एकजनाले पढाउने र अर्कोले अरू कार्य गर्ने सल्लाह भयो। ब्रह्माका मानसपुत्र अंगिराले भृगुसँग 'मैले तपाईंको छोरा कविलाई आफ्नो छोरा जीवसित सँगै राखेर पढाउँछु' भन्नुभयो। ब्रह्माका अर्का मानसपुत्र भृगुले आफ्नो छोरालाई अंगिराको सेवामा राख्नुभयो।

यसरी महर्षि अंगिराले कवि र जीवलाई शिष्यरूप ठानी शिक्षा प्रदान गर्न शुरु गर्नुभयो। तर महर्षि अंगिराले आफ्नो छोरालाई बढी शक्तिशाली बनाउन एक्लै पढाउने र ज्ञान दिने कुरामा पनि भेदभाव गर्न लाग्नुभयो। यसरी गुरुको पथबाट उहाँ डगमगाउनुभयो। यो कुरा कविलाई चित्त बुझेन। यस्तो गुरुबाट कसरी प्राप्ति हुन्छ भनेर उनलाई शङ्का उत्पन्न भयो। त्यसपछि उनले गुरु चरण समातेर क्षमायाचना गर्दै भने– 'हे गुरुदेव, हजूर आफ्नो कर्तव्यबाट चुक्नुभयो। कुनै पनि गुरुले पुत्र र शिष्यमा भेद गर्नु हुँदैन तर त्यस्तो क्रियाकलाप हजूरले गर्दै हुनुहुन्छ। यसैले हजूरले मलाई सेवाबाट बिदा दिनुहोस्। म अब अर्कै गुरुको खोजीमा जाँदैछु।'

कवि गुरु आश्रम छोडेर बाहिर निस्के। उनी प्रतिभाशाली, मेधावी बालक थिए। जीवनमा केही प्राप्त गर्ने उनको चाहना थियो। उनले घर फर्किन चाहेनन्। बरु क्षमतावान् भएर घर फर्केमा पिताश्री पनि प्रसन्न हुने कुरालाई ध्यानमा राखेर उनले भगवानसँग प्रार्थना गरे– 'हे भगवान् ! मलाई कुनै त्यस्तो महापुरुषको दर्शन गराइदिनुहोस् जसले मलाई मार्गनिर्देशन गर्न सकोस्।' संयोगले महर्षि गौतम भेटिनुभयो। कविले महर्षिसँग सोध्नुभयो– 'हे मुनिवर, मलाई त्यस्तो गुरु बताइदिनुहोस् जोसँग यस्तो विद्या होस् जुन अरू कसैसँग छैन, म त्यस्तो विद्याको अध्ययन गर्न चाहन्छु।' महर्षि गौतमले कविलाई भगवान् शंकर कहाँ जाने सल्लाह दिनुभयो। त्यसपछि उनी त्यहाँबाट हिँडे र गौतमी गङ्गा गोदावरीमा स्नान गरी भगवान् शिवको तपस्या गर्न लागे। दृढ भावनाका साथ श्रद्धा-भक्तिपूर्वक गरिएको आत्मिक प्रार्थनाबाट खुशी भई भगवान् शंकर प्रकट हुनुभयो र वर माग्न भन्नुभयो। कविले हात जोडेर भन्न लागे– 'हे भगवान्, जुन विद्या हजूरबाहेक ब्रह्मा आदि देवतासँग पनि छैन, त्यस्तो दिव्य विद्या मलाई प्रदान गर्नुहोस्।'

कविको तपस्याबाट प्रसन्न भएर भगवान् आशुतोष शिवले भन्नुभयो– 'वत्स, म तिमीलाई यस्तो विद्या दिँदैछु जसको ज्ञान मबाहेक अरू कसैसँग छैन। मैले यस निर्मल विद्याको निर्माण महान् तपस्याको बलबाट गरेको हुँ। यसको नाम 'मृतसञ्जीवनी' हो। यसलाई मैले ब्रह्मा तथा विष्णुबाट पनि लुकाएर राखेको छु।'

उनै कवि कालान्तरमा शुक्राचार्यको नामबाट विख्यात् भए भने जीव वृहस्पतिको नामबाट प्रसिद्ध भए। यसरी शुक्राचार्यले संसारमा कसैसँग नभएको मृतसञ्जीवनी विद्या प्राप्त गर्न सफल हुनुभयो जुन विद्या महर्षि अंगिराले आफ्नो पुत्र वृहस्पतिलाई दिन सक्नुभएन। वृहस्पतिले पनि प्राप्त गर्न नसकेको विद्या प्राप्त गरी भगवान् शिवको शिष्यको रूपमा शुक्राचार्य सुविख्यात् हुनुभयो।

यसरी महर्षि अंगिराको भेदभावबाट भित्रैबाट इख लिएर, दृढ संकल्प लिएर हिँड्नुभएका शुक्राचार्यले दिव्यतम ज्ञान प्राप्त गर्न सफल हुनुभयो। वृहस्पति देवताको गुरुको रूपमा र शुक्राचार्य दानवहरूको गुरुको रूपमा प्रतिष्ठित हुनुभयो। जय गुरुदेव !

# शुक्राचार्यद्वारा सञ्जीवनी विद्या प्रदान

पौराणिक कालमा देवता र असुर हरूबीच भीषण युद्ध चलिरहँदा असुर हरूका गुरु शुक्राचार्यसँग मृतसञ्जीवनी विद्या भएकोले युद्धमा मरेका असुरहरू मृतसञ्जीवनी विद्याबाट उनले पुन: जीवित तुल्याइदिन्थे । देवताहरूतर्फ भने यस्तो विद्या जान्ने कोही नभएकोले कोही पनि पुन: जीवित हुन पाएनन् । देवताहरूको विनाश यसप्रकार भइरहेको हुनाले त्यो विद्या प्राप्त गर्न देवगुरु वृहस्पतिका छोरा कचलाई शुक्राचार्य कहाँ पठाइयो ।

कच आज्ञाकारी र होनहार विद्यार्थीका रूपमा शुक्राचार्य कहाँ उपस्थित भए र उनले विनम्रतापूर्वक शुक्राचार्यलाई आफूलाई शिष्यको रूपमा स्वीकार गर्न अनुरोध गरे । शुक्राचार्यले पनि उनको राम्रो व्यवहार देखेर खुशी भएर आफ्ना असुर शिष्यहरू सरह नै पढाउन थाले । शुक्राचार्यकी छोरी देवयानी साह्रै राम्री थिइन् । शुक्राचार्यको धेरैजसो समय ध्यानादि कार्यमा नै बित्ने र कचले गुरु आश्रममा बसेर आइपरेको काम गरिरहेको क्रममा देवयानीले कचलाई मन पराउन थालिन् । तर असुर शिष्यहरूलाई कचले राम्ररी विद्याध्ययन गरेको र देवयानीले उनलाई प्रेम गरेको मन परेन । त्यसैले उनीहरूले कचलाई मार्ने निधो गरे ।

एकदिन कच गोठालो गएको बेला असुर शिष्यहरूले कचलाई मारेर टुक्राटुक्रा पारी कुकुरलाई ख्वाए । साँझ पर्दा पनि कच नआइपुगेको हुनाले देवयानी ज्यादै व्याकुल भइन् । जसरी पनि कचलाई आफूसामु उपस्थित गराउनु पर्ने नभए आफूले खानेकुरा केही पनि ग्रहण नगर्ने देवयानीको कुरा सुनेर शुक्राचार्यले ध्यान गरेर हेर्दा कच मारिइसकेको थाहा पाए । तर आफ्नो मृतसञ्जीवनी विद्याद्वारा उनलाई पुन: जियाएर सशरीर देवयानी सामु उपस्थित गराए । कचले आफूलाई असुर शिष्यहरूले मारेको बताएपछि देवयानीले उनीसँग झन् बढी प्रेम गर्न थालिन् ।

एकदिन देवयानीले कचलाई फूल लिन वनमा पठाइन् । यो कुरा असुर शिष्यहरूलाई थाहा भयो । उनीहरूले कचलाई पछ्याउन थाले । जङ्गलमा पुगेपछि कचलाई मारेर मृत शरीरलाई पिँधेर धूलोपिठो पारी समुद्रमा हालिदिए । कच साँझसम्म पनि नफर्केको हुनाले यता देवयानी चिन्तित भइन् । उनले यो कुराको जानकारी शुक्राचार्यलाई दिइन् । शुक्राचार्यले ध्यानदृष्टिले हेर्दा कच फेरि मारिएको थाहा हुन आयो । उनले आफ्नो मृतसञ्जीवनी विद्याको बलले पुन: उनलाई जियाए । असुर शिष्यहरूले कचलाई फेरि कसरी मार्न सकिएला भनेर सरसल्लाह गरे । एकदिन कच गोठालो गएको बेला पारी उनलाई मारेर मृत शरीरलाई आगोमा जलाएर सबै खरानी शुक्राचार्यलाई सबैभन्दा मनपर्ने मदिरामा घोलेर उनलाई खान

# रेवणनाथद्वारा सञ्जीवनी विद्या प्रयोग

नवनाथमध्येका रेवणनाथ एकजना ब्राह्मणको घरमा बस्नुभएको थियो । उक्त ब्राह्मणका छवटा पुत्रहरू त मरिसकेका थिए, सातौं बच्चा पनि भर्खरै मऱ्यो । ब्राह्मणले उहाँसँग दु:खपुकारा गरे । तब क्रोधमा आएर रेवणनाथ भन्नुहुन्छ- 'तिमी केवल तीन दिनसम्म आफ्नो छोराको शरीरलाई सम्हालेर राख र बिग्रनबाट जोगाऊ । अब म यमपुरी गएर तीन दिनभित्र तिम्रा सातै पुत्र फिर्ता लिएर आउनेछु ।'

रेवणनाथले अमर नामक भस्म बच्चाको शवमा दलिदिनुभयो र आफू यात्रास्त्रको सहायताले यमपुरी पुग्नुभयो । योगी रेवणनाथलाई देख्नासाथ यमराज सिंहासनबाट उठे र नाथको पूजा, अर्चना गरेर नम्र वाणीमा सोधे- 'नाथजी, कसरी कृपा गर्नुभयो ?' तब रेवणनाथ भन्नुहुन्छ- 'यमराज ! म ब्राह्मणको घरमा हुँदै तिमीले उनका बालकलाई यहाँ कसरी लिएर आयौ ? अब तिमी उनका सातै पुत्र फिर्ता गर्ने कृपा गर । यदि तिमीले तुरुन्त यस्तो गरेनौ भने तिम्रो यमपुरी जलाएर भस्म गरिदिन्छु ।' यमराजले विचार गरे यो खतरा आफै नमोलेर यी नाथजीलाई कैलाश पर्वतमा पठाइदिनुपर्छ । तब यमले हात जोडेर भने- 'यो कार्य मेरो अधिकारभन्दा बाहिर छ । यो सबै कार्य ब्रह्मा, विष्णु र शंकरको हातमा गइसकेको छ । यसकारण सीधै कैलाश पर्वतमा जानुहोस् । त्यहाँ तपाईंको कार्य अवश्य हुनेछ ।' रेवणनाथ भन्नुहुन्छ- 'तिमीले भन्छौ भने कैलाश पनि जान्छु ।'

यमराजसँग यति भनेर नाथजी कैलाश पर्वत पुग्नुभयो । उहाँलाई रोक्दै शिवगणले सोधे- 'तपाईं को हुनुहुन्छ ? यहाँ किन आउनुभएको हो ?' सन्तले भन्नुभयो- 'मेरो नाम रेवणनाथ हो र म शिवजीसँग भेट गर्न आएको हुँ । यहाँ एक ब्राह्मण कुमारलाई चोरेर ल्याइएको छ । यसकारण चोरलाई दण्ड दिएर बच्चालाई फिर्ता लिएर जानेछु ।' यस्तो सुनेर शिवगण क्रोधमा

दिए । त्यो साँझ अबेरसम्म पनि कच नआएकोले देवयानी रुँदै बुबा शुक्राचार्य कहाँ गएर भनिन्– 'कच बिना म बाँच्न सक्दिन । त्यसैले कचलाई तुरुन्त मेरो साम् उपस्थित गराउनुहोस् ।' शुक्राचार्यले ध्यान गरेर हेर्दा सारा वृत्तान्त थाहा पाए र देवयानीलाई सुनाए । यसपटक फेरि कचको लागि सञ्जीवनी विद्याको प्रयोग गर्ने हो भने त देवयानीले आफ्नो बुवा शुक्राचार्यलाई गुमाउनुपर्ने हुन्थ्यो किनकि कच जीवित हुने हो भने शुक्राचार्यको पेट फोरेर मात्र बाहिर निस्कन सकिन्थ्यो । देवयानी भने कच र शुक्राचार्यमध्ये कसैलाई पनि गुमाउन तयार थिइनन् । उनले कुनै न कुनै उपाय लगाउन बुवालाई भनिन् । त्यसपछि शुक्राचार्यले एउटा जुक्ति निकाले । उनले सर्वप्रथम कचलाई मृतसञ्जीवनी विद्या आफ्नो पेटभित्र नै सिकाए । त्यसपछि शुक्राचार्यको पेट फोडेर कच बाहिर निस्के अनि फेरि मृतसञ्जीवनी विद्याद्वारा आफ्ना गुरु शुक्राचार्यलाई पनि जीवित गराए ।

यसरी कचले एक आज्ञाकारी शिष्यको रूपमा असुर जातिका गुरु कहाँ अनेक दुःख, कष्ट झेल्दै धेरैपल्ट मृत्यु वरण गर्दै संसारमा अरू कसैलाई थाहा नभएको अति गोप्य विद्या मृतसञ्जीवनी सिक्न सफल भए । देवयानीले उनीसँग विवाह गर्ने प्रस्ताव राखिन् । तर कचले विवाह गर्न नसक्ने बताए किनभने शुक्राचार्यको पेटबाट उनी पुनर्जीवित भएकोले नातामा आफू उनको भाइ हुन गएको तर्क उनको थियो । देवयानी कचसँग वियोग हुने कुराले ज्यादै दुःखी भइन् र प्रगाढ प्रेमको अपहेलना भएकोले 'तिमीले मृतसञ्जीवनी विद्याको प्रयोग गर्न सक्ने छैनौ' भनी श्राप दिइन् । कचले त्यसलाई स्वीकारेर भने– 'मैले प्रयोग नगरे पनि देवलोकमा योग्य देवतालाई यस विद्यालाई सिकाउने छु ।' यति भनी उनी देवलोक गए ।

आए र उनीहरू रिसाएर भन्छन्- 'तिमी कुनै गन्धर्वको शिष्य हौ जस्तो लाग्छ ।' यति सुनेपछि रेवणनाथलाई पनि रिस उठ्यो र उहाँले भन्नुभयो- 'तिमीहरू मेरो गुरुलाई गन्धर्व भन्दछौ तर तिमीहरू अवश्य पनि गन्धर्वजस्तै वनमा घुम्नेछौ ।' यसो भनेर रेवणनाथले स्पर्शास्त्र फ्याँक्नुभयो जसले गर्दा सबै द्वारपाल र तेह्र हजार शिवगण जमिनमा टाँसिए । ती सबै कुखुरा बनेका थिए । शिवगणहरूको यस्तो दशा देखेर सारा कैलाशबासी डराए । अर्को द्वारपाल गएर शिवजीलाई सारा वृत्तान्त बताए । तब शिवजीले अष्ट भैरवहरूका साथ हजारौं गणहरूलाई त्यहाँ पठाउनुभयो । नाथजीले स्पर्शास्त्रबाट उनीहरूको पनि त्यही हालत बनाइदिनुभयो । तर भैरवले उहाँमाथि धनुष हातमा लिएर वातास्त्र, अग्न्यास्त्र र नागास्त्रको योजना बनाएर वाण छोडे । तब नाथले पर्वतास्त्रको योजनाबाट ती अस्त्रलाई भैरवतिर नै मोडिदिनुभयो र ती भैरवमाथि नै झरेर नष्ट भए । पहरेदारहरूले सारा वृत्तान्त शिवजीको नजिक गएर सुनाएपछि उहाँलाई अत्यन्त क्रोध आयो र नन्दीमा चढेर युद्ध स्थलमा आइपुग्नुभयो । तब नाथजीले विचार गर्नुभयो- 'शिवजीसँग युद्ध गर्न मलाई शोभा दिँदैन ।' यसकारण वाताकर्षणास्त्र मंत्रको भस्म अभिमंत्रित गरेर शिवजीमाथि फ्याँक्नुभयो जसबाट उहाँको श्वास बन्द भयो र नन्दीबाट लड्नुभयो । त्यसैगरी अष्ट भैरव पनि सबै बेहोश भए ।

शिवजी र उहाँको गणको यस्तो अवस्था सुनेर भगवान् विष्णु तुरुन्तै त्यहाँ आइपुग्नुभयो र रेवणनाथलाई अंकमाल गरेर भन्नुभयो- 'तिमीले के कारणले गर्दा यहाँ आएर प्रलय मच्चाएका हौ ?' तब रेवणनाथ हात जोडेर भन्नुहुन्छ- 'प्रभु ! म ब्राह्मणको घर हुँदाहुँदै यिनले ब्राह्मणको पुत्रको प्राण हरेर ल्याएका छन् । यसकारण ती ब्राह्मणका सातै पुत्रहरू मलाई दिलाइयोस् । म सञ्जीवनीको शक्तिबाट जिउँदो गराएर लिएर जाउँला ।' भगवान् विष्णु भन्नुहुन्छ- 'म सातै ब्राह्मण पुत्र तिमीलाई फिर्ता गरिदिन्छु तर तिनीहरूको शरीरको निर्माण तिमी स्वयंले गर्नुपर्ने छ ।' विष्णुको कुरा सुनेर रेवणनाथजी मान्नुभयो र प्रेरकशास्त्रको प्रयोगले शंकरजीको होश आयो । फेरि विभक्तास्त्रको जप गरेर अष्टभैरव माथि छर्कनुभयो, तब ती सबै अस्त्रबाट मुक्त भए । जय गुरुदेव !

# टुक्रिएको शरीर जोडियो

एकपटक गुरु मच्छिन्द्रनाथ मृत राजा त्रिविक्रमको देहमा पराकाया प्रवेश सिद्धिको माध्यमबाट प्रवेश गर्नुभयो । उहाँले आफ्नो देहलाई गुरु गोरखनाथको जिम्मा लगाउनुहुँदै १२ वर्षपछि फर्कने बताउनुभयो । गुरु गोरखनाथले आफ्ना गुरुको देहलाई लुकाएर एउटा गोठालोको जिम्मामा छाडी आफू भने गुरुकै अनुमतिले १२ वर्षसम्म तीर्थयात्राको लागि निस्कनुभयो । त्यसपश्चात् रानीसँगको सहचर्यबाट गुरु मच्छिन्द्रनाथको एउटा पुत्र समेत भएको थियो । पछि रानीले गोठालोबाट सबै भेद थाहा पाइन् । आफू पुनः पति सुखबाट वञ्चित हुन नपरोस् भनी लुकाएर राखिएको गुरु मच्छिन्द्रनाथको शरीरलाई काटकुट पारेर घनघोर जंगलको बीचमा फ्याँकिन् र आफू सुखसँग गुरु मच्छिन्द्रनाथ (राजा त्रिविक्रम) सँग रहन लागिन् ।

भगवान् शिवका प्रमुख गण वीरभद्रको गुरु मच्छिन्द्रनाथसँग कुनै समयमा शत्रुता थियो । यो घटनापश्चात् गुरु मच्छिन्द्रनाथको शरीर फालिएको स्थान वीरभद्रले थाहा पाई त्यसलाई कैलाशमा लगेर लुकाए । १२ वर्षपश्चात् फर्केर आउँदा जब गुरु गोरखनाथले यो सम्पूर्ण कुरा थाहा पाउनुभयो, तब चौरंगीनाथसहित कैलाशमा गएर वीरभद्रसँग आफ्ना गुरुको शरीर माग्नुभयो । वीरभद्रले भने कुनै पनि हालतमा नदिने भनेर युद्धका लागि तम्सिए । शिवगणका सेनासँग गुरु गोरखनाथ एवं चौरंगीनाथ योगीको भयंकर युद्ध हुन लाग्यो । चौरंगीनाथले मोहिनी अस्त्र र वातास्त्रको योजनाले वीरभद्रको सारा सैन्यबल तितर-बितर गरिदिए र वीरभद्र भयभीत भएर भ्रममा परे । उनले तुरुन्त आफ्नो अस्त्रको प्रयोग गरे तर गुरु गोरखनाथको सञ्जीवनी योजनाबाट दानवहरू जागेर उठे । महिषासुर, मुचुकुन्द, जालन्धर, मधु, त्रिपुरा, कालियायवन, वकासुर, अघासुर, रावण, कुम्भकर्ण, मेघनाथ आदि राक्षसहरूलाई देखेर देवताहरूले वैकुण्ठलोक गएर सबै समाचार विष्णु भगवान्लाई सुनाए । उहाँले शिवजीलाई त्यस विषयमा अवगत गराउनुभयो । झगडा साम्य पार्न भगवान् शिव वीरभद्रको नजिक गएर प्रेमपूर्वक भन्नुभयो- 'मच्छिन्द्रनाथको शरीर मलाई देऊ, तब यो झगडा मेटिनेछ ।' शंकरजीको आज्ञाअनुसार चामुण्डालाई पठाएर मच्छिन्द्रनाथको शरीरका टुक्राहरू मगाए र गुरु गोरखनाथलाई सुम्पिदिए । गुरु गोरखनाथ भन्नुहुन्छ- 'यी सबै सञ्जीवनी मन्त्रको प्रभावबाट पैदा भएका हुन् । यिनलाई त अवतार धारण गरेर नै मार्नुपर्दछ । तब शंकरजीले एकादशीको दिन अवतार लिएर तिनलाई नाश गर्नुभयो । फेरि वीरभद्रको नाशको तयारी भयो र गुरु गोरखनाथले वाताकर्षण अस्त्रको योजना गरेर सावरी मंत्र पढेर भस्म फ्याँक्ने बित्तिकै वीरभद्रसहित सबै राक्षसहरू मरेर धर्तीमा लडे । वीरभद्र मरेपछि भगवान् शिव शोकमग्न भएर बस्नुभएको थियो । तब गुरु गोरखनाथले उहाँको चरणमा दण्डवत् प्रणाम गर्दै भन्नुभयो— 'वीरभद्रको तपाईंलाई त्यति ठूलो दुःख छ भने मलाई उसका हड्डीहरू मात्र भए पनि उपलब्ध गराउनुहोस्, म उसलाई जिउँदो गराइदिन्छु ।' शिवजीले आफ्ना गणलाई भन्नुभयो— 'जुन हड्डीहरूले मेरो नाम उच्चारण गरिरहेका होलान्, तिनै वीरभद्रका हड्डीहरू हुन् ।' यस्तो पहिचान बताएर शिवजीले वीरभद्रका हड्डीहरू खोज्न लगाउनुभयो र गुरु गोरखनाथको नजिक ती हड्डीहरू लिएर आउनुभयो । तब गुरु गोरखनाथले सञ्जीवनी मंत्रद्वारा सिद्ध गरेर त्यसको भस्म वीरभद्रलाई छर्किनुभयो, तब वीरभद्र उठेर आफ्नो धनुषवाण खोज्न लाग्यो र भन्यो- 'म अहिल्यै सबै राक्षसहरूलाई मारेर गोरखनाथलाई यमलोक पुऱ्याइदिन्छु ।' यति सुनेर शिवजीले भन्नुभयो— 'व्यर्थको कुरा नगर ।' फेरि उनलाई सारा कुरा सम्झाएर गुरु गोरखनाथसँग मित्रता गराइदिनुभयो । यत्तिकैमा शिवगणहरूले त्यहाँ आएर गुरु गोरखनाथ र शिवजी दुवैलाई साथ लिएर कैलाश गए र मच्छिन्द्रनाथको शरीरका टुक्रा लिएर शिवालयमा आए ।

यता त्रिविक्रम राजा भोगविलासमा मस्त थिए । एक दिन उनी शिवालयमा गए जहाँ गुरु गोरखनाथ आफ्नो गुरुको शरीरका टुक्राहरू लिई प्रतीक्षा गरिरहनु भएको थियो । राजालाई कुशल समाचार सोधेपछि गुरु गोरखनाथले अहिलेसम्म घटेको सारा घटना बयान गर्नुभयो । तब राजाले भने, 'तपाईं केही बेर पर्खनुहोस् । म चाँडै नै धर्मनाथलाई गद्दी सुम्पेर तपाईंसँग आउँछु ।' यसपछि राजा दरबारमा गए र धर्मनाथलाई राज्याभिषेक गरिदिए । त्यसपछि मच्छिन्द्रनाथले राजा त्रिविक्रमको शरीर छोडेर शिवालयको आफ्नै शरीरमा प्रवेश गर्नुभयो जसलाई गुरु गोरखनाथले सञ्जीवनीको प्रभावले पहिलेजस्तै बनाएर राख्नुभएको थियो ।

हरेक चाडपर्व एवम् साँस्कृतिक परम्पराहरू देशका राष्ट्रिय पहिचान हुन् । यस्ता कुराहरूको अन्त्य हुनु भनेको राष्ट्रिय पहिचान गुम्नु हो । राष्ट्रिय पहिचानको जगेर्नाका लागि पनि चाडपर्व एवम् साँस्कृतिक परम्पराको प्रवर्द्धन र सम्वर्द्धन गर्नु हाम्रो नैतिक दायित्व हो ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

# तारक मन्त्रबाट मृत्यु निवारण

त्यसबेला हामी सबै अमरनाथको यात्रामा थियौँ । अमरनाथ विश्वको एक मात्र यस्तो शिवलिङ्ग हो जो प्रकृति निर्मित हिउँबाट स्वत: बन्दछ । माथिबाट थोपा-थोपा पानी खसेर यस शिवलिङ्गको निर्माण हुन्छ ।

कहिले यो शिवलिङ्ग चार-पाँच इञ्चको मात्र बन्दछ भने कहिलेकाहीँ यसको उचाइ तीन-चार फिट पनि हुन जान्छ । वर्षमा एकपटक यात्रीहरू यहाँ आउँछन् । श्रावण पूर्णिमाको अवसरमा हजारौँको सङ्ख्यामा तीर्थालुहरू अमरनाथको जयघोष गर्दै दर्शन गर्न यहाँ आइपुग्छन् ।

श्रीनगरबाट विभिन्न दुर्गम स्थान हुँदै यात्रीहरू यहाँ आइपुग्छन् । अहिले त सडकमार्ग पनि केही सुविधाजनक भइसकेको छ तर त्यसबेला त कुनै पनि मार्गचित्र थिएन । जसलाई यहाँको बारेमा ज्ञान हुन्थ्यो, ऊ मात्र अमरनाथ मन्दिरसम्म पुग्न सक्थ्यो ।

हामीले श्रावण पूर्णिमाभन्दा करिब दस-पन्ध्र दिन अगाडि नै मन्दिर पुग्ने निधो गर्‍यौँ । पूर्णिमाको अवसरमा धेरै भीड हुने हुनाले भगवान् अमरनाथको दर्शन सुविधाजनक हुँदैन । यसैले हामीले केही समय अगाडि नै त्यहाँ पुगेर भगवान् शङ्करको दर्शन गर्न चाह्यौँ ।

हामीसित गुरुदेवका उपासक एवं शिवभक्त ब्रजमोहन जालान र उनकी पत्नी पनि थिए । धेरै वर्षदेखि उनीहरूले गुरुदेवसँगै जीवनमा एकपटक अमरनाथ जाने इच्छा प्रकट गरेका थिए ।

यसपटक गुरुदेवको मनमा अमरनाथको दर्शन गर्ने विचार आयो । विशेषत: उहाँको विचार त सहस्रनागस्थित संन्यासी शिष्यहरूलाई मार्गदर्शन प्रदान गर्नु थियो । त्यसैले यात्राको लागि जालानजीलाई पहलगाउँमा भेट्न आदेश दिनुभयो ।

कश्मीरमा रहेको पहलगाउँ अत्यन्तै सुन्दर र रमणीय स्थान हो । लिद्दर नदीको किनारामा बसेको यो सानो बस्ती संसारका श्रेष्ठ स्थलहरूमध्ये एक हो । जालान र उनकी पत्नी सुमित्रा यहाँ आइसकेका रहेछन् । यात्रामा हामी संन्यासी गुरु भाइ बहिनी लगायत जालान, उनकी पत्नी तथा अन्य पाँच-छजना गृहस्थ व्यक्तिहरू पनि थिए ।

जालानले भने– मेरी पत्नी दम र मधुमेहबाट पीडित छिन् र डाक्टरले स्पष्ट शब्दमा यो यात्रा नगर्न भनेका छन् । यति धेरै उचाइमा यात्रा गरेको खण्डमा कुनै पनि घटना घट्न सक्छ भनेर त चेतावनी नै दिएका छन् ।

गुरुदेवले एकपटक सुमित्रातिर हेर्नुभयो, उनको आँखामा केवल याचना थियो र गुरुदेवले यात्रामा साथै हिँड्न नदिनुहोला भन्ने उनलाई आशङ्का थियो । उनको यस जिज्ञासा र

उत्सुकतालाई ध्यानमा राखेर गुरुदेवले साथै हिँड्ने अनुमति दिनुभयो ।

हामी सबै हिँड्यौं । सहस्रनागसमीप आइपुग्दा नपुग्दै सुमित्राको स्वास्थ्यस्थिति बिग्रिन लाग्यो । यो स्थान अत्यन्तै उचाइमा थियो । अक्सिजनको कमी हुनाले सास फेर्न गाह्रो हुन लागेको थियो । दमका रोगीहरू त यसतर्फ आउनै हुँदैन । सुमित्राको स्वास्थ्य ठीक नभएको कुरा गुरुदेवलाई थाहा भएर पनि उहाँले कुनै विशेष ध्यान दिनुभएन ।

यहाँबाट अगाडि बढ्दै जाँदा बिस्तारै-बिस्तारै उनको स्वास्थ्य झन् झन् बिग्रँदै जान थाल्यो । बाटोमा एउटा घोडा भाडामा लिएर सुमित्रालाई त्यसमा चढाइयो तर पनि उनको स्वास्थ्यमा कुनै प्रकारको सुधार हुन सकिरहेको थिएन । गुरुदेव सहस्रनागमा नै बस्नुभएको थियो । उहाँले सहस्रनाग तलाउपारीका संन्यासी शिष्यहरूसँग सम्पर्क गरेर अर्को बाटो हुँदै अमरनाथ आइपुग्ने बताएर हामीलाई अगाडि पठाउनुभएको थियो ।

त्यहाँ पुगेपछि हामी आनन्दविभोर भयौं । उचाइमा अवस्थित यो मन्दिर पवित्र र दिव्य छ । भनिन्छ– यसको पछिल्तिर कैलाश मानसरोवर जाने बाटो छ र भगवत्पाद शंकराचार्य यही बाटो भएर कैलाश मानसरोवर जानुभएको थियो ।

तर हाम्रो हर्ष र प्रसन्नतामाथि अचानक अंकुश लाग्न गयो । बिस्तारै-बिस्तारै सुमित्राको हालत अत्यन्तै बिग्रिँदै गइरहेको थियो, उनलाई मन्दिर प्रांगणको बाहिर नै सुताइएको थियो । उनका पति लगभग विक्षिप्तजस्तै गरी उभिएका थिए । हामी सबै दुःखी तथा उदास भएर भगवान् शंकरसमक्ष प्रार्थना गरिरहेका थियौं । यसका अतिरिक्त हामीसँग उपाय पनि त थिएन । गुरुदेव आइपुग्नु भएको थिएन । हामी प्रतिपल उहाँको प्रतिक्षा गरिरहेका थियौं ।

तब सम्भ्रान्तजस्तो देखिने एकजना यात्रीले आएर मरणासन्न सुमित्रालाई हेरे । उनी कलकत्ताको अगरतलास्थित डा. ए. के. चटर्जी थिए । उनले सुमित्रालाई अलिकति अक्सिजन र औषधि दिए । तैपनि सुमित्राको नाडीको गति क्रमशः मन्द भइरहेको थियो ।

ती डाक्टर पनि उदास थिए । एक त सुमित्राको रक्तचाप साह्रै कम थियो, त्यसमाथि त्यस्तो जाडो ठाउँ । केही बेरपछि डाक्टरले सुमित्राको नाडी छाम्दै भने– बाँच्ने आशा छैन, अब गर्न पनि केही सकिँदैन ।

जालानले यो स्थिति हेर्न सकिरहेका थिएनन् । उनको आँखाबाट आँसुको धारा बगिरहेको थियो । उनले भने– डाक्टरसाहब, तपाईंले हुन सक्ने सम्मको प्रयास गर्नुहोस् । त्यतिञ्जेलसम्म गुरुदेव आइपुग्नुहुन्छ कि ?

केही बेरपछि हेर्दा त सुमित्राको शरीर पूरै चिसो भइसकेको थियो । नाडी छाम्दै डाक्टरले भने– 'Finished' ।

त्यहाँको वातावरणमा अचानक चित्कार फैलियो । डाक्टरले फेरि पनि सुमित्राको मुटुको धड्कन छ कि भनेर हेर्न खोजे तर उनी निरुत्तर भए ।

त्यत्तिकैमा अचानक गुरुदेव आइपुग्नु भयो, यस्तो लागिरहेको थियो कि उहाँ करिब दुई-तीन माइल टाढाबाटै दौडँदै आउनुभएको होस् । संन्यासी शिष्यहरू त धेरै पछाडि छुटेका थिए । उहाँले सुमित्रालाई हेर्नुभयो र परिस्थिति बुझिहाल्नुभयो ।

जालान ढलेको रूखझैं गुरुदेवको पाउमा परे र भने– 'हजूरकै अनुमति लिएर त मैले सुमित्रालाई यहाँ लिएर आएको थिएँ । अब मैले घर पुगेर कसरी मुख देखाउने ?' भन्दाभन्दै उनको वाक्य बन्द भयो ।

डाक्टर चटर्जीले उदास स्वरमा भने– 'She is totally finished.'

मैले पनि लगभग निराश भएर भनें– 'गुरुदेव, कसरी यस्तो हुन पुग्यो ?'

गुरुदेवको तीखो दृष्टि मेरो अनुहारमा अडियो, मानौं उहाँ भनिरहनुभएको छ कि तेरो मनमा असम्भवको भाव कसरी आयो ? तर मैले अनुभव गरें कि उहाँ स्वयं अत्यन्त क्रोधित एवं व्यग्र हुनुहुन्थ्यो ।

त्यसपछि गुरुदेव सुमित्राको दाहिनेतिर बस्नुभयो, उहाँको अनुहार भगवान् अमरनाथको शिवलिङ्गतिर थियो । शिरमा बाँधिएको जटा खुलेर चारैतिर फैलिएको थियो, हातको कमण्डलुलाई उहाँले एकातिर फ्याँकिदिनु भएको थियो र आँखा राताराता थिए । लाग्दथ्यो, उहाँका आँखाहरू भनिरहेका छन्– भगवान् शिवको प्रांगणबाटै सुमित्रालाई लिएर जाने कालको यत्रो आँट ?

एकपटक उहाँले सुमित्रालाई ध्यानपूर्वक हेर्नुभयो । उहाँको मुखबाट अचानक ध्वनि प्रस्फुटित भयो–

**चन्द्रशेखर चन्द्रशेखर चन्द्रशेखर पाहि माम् ।**
**चन्द्रशेखर चन्द्रशेखर चन्द्रशेखर रक्ष माम् ।।**
**रत्नसानुशरासनं रजताद्रिशृङ्गनिकेतनं,**
**सिंजिनीकृत-पन्नगेश्वरमच्युतायनसायकम् ।**
**क्षिप्रदग्धपुरत्रयं त्रिदिवालयैरभि वन्दितं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।१।।**
**पंचपादपपुष्पगन्धपदाम्बुजद्वय शोभितं,**
**भाललोचनजातपावक दग्धमन्मथविग्रहम् ।**
**भस्मदग्ध-कलेवरं भवनाशनं भवमव्ययं,**

**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।२।।**
**मत्तवारणमुख्यचर्मकृतोत्तरीय-मनोहरं,**
**पंकजासन-पद्मलोचन-पूजिताङ्घ्रिसरोरुहम् ।**
**देवसिन्धु-तरंग सीकर-स्निग्ध-शुभ्रजटाधरं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।३।।**
**यक्षराजसखं भगाक्षहरं भुजंग-विभूषणं,**
**शैलराजसुतापरिष्कृतचारुवामकलेवरम् ।**
**क्ष्वेडनौलगलं परश्वधधारिणं मृगधारिणं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।४।।**
**कुण्डलीकृत-कुण्डलेश्वर-कुण्डलं वृषवाहनं,**
**नारदादिमुनीश्वरस्तुतवैभवं भुवनेश्वरम् ।**
**अन्धकान्धकमाश्रितामरपादपं शमनान्तकं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।५।।**
**भेषजं भवरोगिणामखिलापदामपहारिणं,**
**दक्षयज्ञविनाशनं त्रिगुणात्मकं त्रिविलोचनम् ।**
**भुक्ति-मुक्तिफलप्रदं सकलाघसंघनिबर्हणं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।६।।**
**भक्तवत्सलमर्जित निधिमक्षयं हरिदम्बरं,**
**सर्वभूतपतिं परात्परमप्रमेयमनुत्तमम् ।**
**सोमवारिदभूहुताशन-सोमपानिलखाकृतिं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।७।।**
**विश्वसृष्टिविधायिनं पुनरेव पालनतत्परं,**
**संहरन्तमपि प्रपञ्चमशेषलोकनिवासिनम् ।**
**क्रीडयन्तमहर्निशं गणनाथयूथसमन्वितं,**
**चन्द्रशेखरमाश्रये मम किं करिष्यति वै यमः ।।८।।**
**मृत्युभीत-मृकण्ड-सूनु-कृतस्तवं शिवसन्निधौ,**
**यत्र कुत्र च यः पठेन्नहि तस्य मृत्युभयं भवेत् ।**
**पूर्णमायुररोगितामखिलार्थसम्पदमादरं,**
**चन्द्रशेखर एव तस्य ददाति मुक्तिप्रयत्नतः ।।९।।**

यसपछि तुरुन्तै गुरुदेवले सुमित्राको नाडी समातेर 'तारक मन्त्र'को जप गर्न लाग्नुभयो । उहाँका आँखा बन्द थिए, पूरै शरीर बिस्तारै-बिस्तारै तातो भइरहेको थियो र ओठबाट तारक मन्त्र निरन्तर उच्चरित भइरहेको थियो ।

हामी सबै शिष्यहरू सुमित्राको वरिपरी उभिएका थियौं । डाक्टर चटर्जीले गुरुदेवको क्रियाकलापलाई आश्चर्यका साथ नियालिरहेका थिए । ब्रजमोहन त केही बोल्ने र सुन्ने स्थितिमा नै थिएनन् ।

अकस्मात् सुमित्राको शरीरमा कम्पन भयो । यस्तो लाग्यो मानौं शरीर चलिरहेको छ । सबैको प्रसन्तनाले सीमा नाघ्यो । ती डाक्टर त मुर्दा शरीरमा पनि कम्पन हुन सक्छ भनेर विश्वास नै गर्न सकिरहेका थिएनन् ।

गुरुदेव यी सबैबाट बेखबर आँखा बन्द गरेर लगातार कुनै विशेष मन्त्र उच्चारण गरिरहनु भएको थियो । यस्तो लाग्थ्यो कि अन्तरिक्षमा भट्किरहेको सुमित्राको आत्मालाई तानेर ल्याइरहनु भएको छ । गुरुदेवको अनुहारमा देखिएको तनावबाट यसको स्पष्ट आभास भइरहेको थियो ।

करिब पन्ध्र-सोह्र मिनेट बितेपछि सुमित्राले बिस्तारै आँखा खोलिन् । हामी सबै शिष्यले एकै स्वरमा 'अमरनाथको जय', 'गुरुदेवको जय'बाट मन्दिरको पूरै प्रांगणलाई गुञ्जायमान गऱ्यौं । गुरुदेवले आँखा खोलेर सन्तोषको सास फेर्नुभयो । ब्रजमोहनले आँखामा प्रेमाश्रु थाम्न सकिरहेका थिएनन् भने अर्कोतर्फ डाक्टर चटर्जी र उनको परिवारका सदस्य साष्टांग प्रणाम गर्दै गुरुदेवको चरणमा परे ।

सुमित्राले जसोतसो उठेर सद्गुरुदेवको चरणमा प्रणाम गरिन् । अकस्मात् गुरुदेवसँग मेरो आँखा जुध्यो । गुरुदेवले भन्नुभयो–'तँ शिष्य बन्न लायक छैनस् । तँमा यस्तो अविश्वास कसरी आयो ? तैंले कसरी भन्न सकिस् कि गुरुदेव, कसरी यस्तो हुन पुग्यो ?'

म लज्जित हुँदै उभिरहेको थिएँ । ब्रजमोहनले पत्नीलाई भने–'उठ, भगवान् अमरनाथको दर्शन गरौं ।'

दुवै हातले गुरुदेवको चरण समात्दै सुमित्राले भनिन्– 'उहाँकै दर्शन त गरिरहेकी छु ।'

यस घटनाको धेरै पछि गुरुदेव प्रसन्न हुनुभएको बखतमा यस विषयमा चर्चा गर्दा उहाँले भन्नुभयो–'म पुग्न केही ढिलो भयो । मलाई त्यहाँको आभास भइसकेको थियो र मैले सुमित्राको प्राणलाई शून्यपथमा जाँदै गरेको पनि देखेको थिएँ । त्यसपछि म दौडेर आइपुगें तर त्यतिबेलासम्म केही ढिलो भइसकेको थियो र सुमित्राको आत्मा तीन लोक पार गरेर चौथो लोकमा पुगिसकेको थियो । त्यसैले त्यहाँसम्म पुगेर त्यस आत्मालाई फर्काएर ल्याउँदा पन्ध्र-सोह्र मिनेट लाग्न पुग्यो ।'

केही बेरपछि उहाँले गोपनीय तारक मन्त्र पनि मलाई बताउनुभयो तर त्यसलाई गोपनीय नै राख्ने शर्तमा ।

त्यस घटनापछि सुमित्रा करिब बत्तीस वर्षसम्म जीवित रहिन् र गुरुदेव जहाँ रहनुभएको भए पनि वर्षमा दुईपटक श्रीमान्सँगै गुरुदेवको चरणमा पुग्ने गर्थिन् । सो घटनापछि चटर्जीले डाक्टरी छोडेर संन्यास धारण गरे, उनी गुरुदेवबाट दीक्षित पनि भए । गुरुदेवले उनको संन्यासी नाम चित्तस्वरूपानन्द राख्नुभयो ।

जय गुरुदेव !

# ज्योतिष र काल निर्णय

**हामीले आफ्नो जीवनका महत्त्वपूर्ण कर्महरु गर्नको लागि कुनै पण्डित वा ज्योतिषीकहाँ गएर शुभ साइत हेराएर सोही समयमा कार्यको थालनी गर्ने गर्दछौँ। तर हरेक पटक पण्डित वा ज्योतिषीको सहारा लिन हामीलाई अनुकूल नहुन सक्छ। साथै, दैनिक जीवनका अनगिन्ती कार्यहरु गर्दा पनि यदि हामीले सही मुहूर्तमा गर्न सक्यौँ भने त्यो कार्य निश्चय नै फलदायी बन्दछ तर यसको लागि बारम्बार साइत हेराइरहन पनि व्यावहारिक हुँदैन। यसको सरल समाधानको लागि हामीले 'मिहिराचार्य'द्वारा उल्लिखित काल निर्णयको सहारा लिन सक्दछौँ। यसप्रकारको विधिबाट व्यतिपात, दिशासूल, योगिनी, चन्द्रमा आदि केही पनि विचार नगरी केवल महिना, बार र समयको आधारमा मुहूर्त निकाल्न सकिन्छ। यो तथ्य सर्वप्रथम गोप्यरुपमा मात्र रहेको थियो जसलाई परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा 'ज्योतिष और काल निर्णय' भन्ने ग्रन्थमार्फत समाजसमक्ष उजागर गरिदिनुभएको थियो। उक्त ग्रन्थमा भएका गूढ रहस्यहरुलाई पाठकहरुसमक्ष पनि उजागर गर्ने उद्धेश्यले हामीले यस अङ्कबाट यो 'ज्योतिष र काल निर्णय' स्तम्भको शुभारम्भ गरेका छौँ। यहाँहरुले यस स्तम्भमा उल्लेख गरिएका कुराहरुलाई अध्ययन मनन गरेर आफ्नो व्यवहारमा उतारेर यसबाट प्रशस्त फाइदा लिन सक्नुहुनेछ।**

'मिहिराचार्य'का ग्रन्थहरूमा कालज्ञानबारे स्पष्टरूपमा उल्लेख भएको पाइन्छ। उहाँले त स्पष्ट भन्नु भएको छ कि कालज्ञानअनुसार कार्य गर्दा निश्चय नै पूर्ण सफलता तथा सिद्धि प्राप्त हुन्छ। यद्यपि हाम्रा ज्योतिष शास्त्रमा दिशासूल, योगिनी, चन्द्रमा आदि उल्लेख छन्। त्यसमा भनिएको छ कि यी सबै तथ्यहरूलाई ध्यानमा राखेर नै शुभकार्यको थालनी गर्नुपर्दछ। तर मिहिराचार्यका अनुसार यदि हामीलाई कालज्ञान छ भने यी अन्य तथ्यलाई ध्यान दिनुपर्ने कुनै आवश्यकता छैन किनकि यो क्षण आफैमा अत्यन्त महत्त्वपूर्ण छ। त्यसैले यसमा व्यतिपात, योगिनी, दिशासूल आदिको अशुभ प्रभाव पर्दैन। यात्रा, विवाह, शुभकार्य प्रारम्भ गर्दा तथा कसैलाई भेट्न अथवा कुनै पनि प्रकारको शुभकार्य प्रारम्भ गर्दा समयको ज्ञान हुनुपर्दछ तथा विशेष समयमा कुनै कार्य प्रारम्भ गर्दा समयको ज्ञान हुनुपर्दछ तथा विशेष समयमा कुनै कार्य प्रारम्भ गरिन्छ भने निश्चय नै त्यसमा पूर्ण सफलता प्राप्त हुन्छ नै।

मिहिराचार्यले बाह्र महिनालाई निम्न भागमा विभाजित गर्नुभएको छ–

१. **पहिलो–चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण**

२. **दोस्रो–ज्येष्ठ र असार**

३. **तेस्रो–आश्विन, कार्तिक, मंसिर र पौष**

मिहिराचार्यले समयलाई चार भागमा बाँड्नुभएको छ–

१. **महेन्द्रकाल** : यी चार भागहरूमध्ये महेन्द्रकाललाई सबैभन्दा बढी महत्त्व दिइएको छ। उहाँका अनुसार महेन्द्रकाल सर्वश्रेष्ठ काल हो। यसमा कुनै पनि कार्य गरिन्छ भने पूर्ण सफलता मिल्दछ।

२. **अमृतकाल** : अमृतकाल आफैमा अनुकूल एवं श्रेष्ठ काल हो तर पनि यसको महत्त्व महेन्द्रकालपछि मात्र आउँछ। यो काल पनि कुनै कार्य सिद्धिको लागि पूर्णतः अनुकूल रहन्छ। यदि कार्य प्रारम्भ गर्दा महेन्द्रकाल उपलब्ध छैन भने अमृतकालमा गर्न सकिन्छ।

३. **वक्रकालः** वक्रकाल आफैमा सामान्य काल भनिएको छ तथा यस काल अवधिमा जुन कार्य शुरुआत गरिन्छ त्यसमा अनावश्यक ढिलाइ एवं बाधाहरू आउँछन्। वक्रकालमा शुरु गरिएको कार्य सफल भएता पनि आवश्यकताभन्दा बढी बाधा, अड्चन, कठिनाइहरू आउँछन् तथा ढिलाइ हुन्छ।

४. **शून्यकालः** शून्यकाल व्यर्थ र निकृष्ट काल हो। यस समयमा जुनसुकै कार्य प्रारम्भ गरिए पनि त्यसमा सफलता मिल्दैन तथा व्यर्थमा बाधा र दुःखहरू आई नै रहन्छन्। अतः यथासम्भव कार्य थालनी गर्दा शून्यकालबाट बच्नु पर्दछ।

# पहिलो भाग अन्तर्गत पर्ने (चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिनामा) पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** |
| ६:००-६:४८दिन | महेन्द्र | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन | वक्र | ६:००-८:२४दिन | अमृत | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | शून्य |
| ६:४८-१०:०० | अमृत | ७:३६-१०:४८<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ८:२४-९:१२ | शून्य | ७:३६-९:१२ | अमृत | ८:२४-९:१२ | शून्य | ६:४८-१:१२<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-८:२४ | वक्र |
| १०:००-२:०० | वक्र | १०:४८-१:१२ | अमृत | ९:१२-१०:०० | वक्र | ९:१२-११:३६ | वक्र | ९:१२-१०:४८ | शून्य | १:१२-४:२४ | वक्र | ८:२४-९:१२<br>*९:००-१०:३०* | शुन्य<br>*राहु* |
| २:००-५:१२<br>*४:३०-६:००* | शून्य<br>*राहु* | १:१२-३:३६ | वक्र | १०:००-१२:२४ | अमृत | ११:३६-१:१२<br>*१२:००-१:३०* | अमृत<br>*राहु* | १०:४८-१:१२ | अमृत | ४:२४-५:१२ | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| ५:१२-६:००<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ३:३६-५:१२ | अमृत | १२:२४-३:३६<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:००<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-४:२४<br>*१:३०-३:००* | वक्र<br>*राहु* | ५:१२-६:०० | शून्य | १२:२४-१:१२ | शुन्य |
| ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ३:३६-५:१२<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:००-३:३६ | वक्र | ४:२४-६:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | १:१२-२:०० | वक्र |
| ६:४८-७:३६ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | शून्य | ३:३६-४:२४ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ७:३६-८:२४ | शून्य | २:००-३:३६ | शून्य |
| ७:३६-८:२४ | शून्य | ७:३६-९:१२ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ४:२४-६:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ८:२४-१०:४८ | अमृत | ३:३६-५:१२ | अमृत |
| ८:२४-१०:०० | अमृत | ९:१२-१०:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ९:१२-१०:०० | अमृत | १०:४८-१:१२ | वक्र | ५:१२-६:०० | शून्य |
| १०:००-१०:४८ | शून्य | १०:००-१:१२ | वक्र | ९:१२-१०:०० | अमृत | ६:४८-९:१२ | अमृत | १०:००-१:१२ | वक्र | १:१२-३:३६ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र |
| १०:४८-१:१२ | वक्र | १:१२-२:४८ | अमृत | १०:००-१२:२४ | वक्र | ९:१२-१०:४८ | महेन्द्र | १:१२-२:४८ | अमृत | ३:३६-४:२४ | शून्य | ८:२४-१०:४८ | अमृत |
| १:१२-३:३६ | शून्य | २:४८-४:२४ | शून्य | १२:२४-२:०० | अमृत | १०:४८-१२:२४ | वक्र | २:४८-४:२४ | शून्य | ४:२४-६:०० | अमृत | १०:४८-१२:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ४:२४-५:१२ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:०० | शून्य | ४:२४-६:०० | अमृत | | | १२:२४-२:०० | शून्य |
| ४:२४-६:०० | अमृत | ५:१२-६:०० | शून्य | २:४८-३:३६ | वक्र | २:००-६:०० | अमृत | | | | | २:००-३:३६ | अमृत |
| | | | | ३:३६-४:२४ | महेन्द्र | | | | | | | ३:३६-४:२४ | शून्य |
| | | | | ४:२४-६:०० | अमृत | | | | | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) द्वारा रचित ***'ज्योतिष और काल निर्णय'*** पुस्तकमा आधारित ।

महेन्द्रकाल- सर्वश्रेष्ठ, अमृतकाल- श्रेष्ठ, वक्रकाल- सामान्य, शून्यकाल- निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैं अशुभ हुन्छ ।

**नोटः- आगामी अंकदेखि (चैत्र अंक) प्रत्येक महिनाको (महेन्द्रकाल, अमृतकाल आदि कालहरूको) सूक्ष्म काल विवरण प्रस्तुत गरिन्छ जसमध्ये पहिलो भाग अन्तर्गत पर्ने महिनाहरूको सूक्ष्म काल निर्णयको अध्ययन गर्न यही तालिकाको उपयोग गर्नुहोला ।**

**जय गुरुदेव !**

मिहिराचार्यले प्रत्येक काललाई पनि बाल, युवा, प्रौढ र वृद्ध गरी चार भागमा बाँड्नुभएको छ । उदाहरणको लागि चैत्र महिनाको आइतबार ६:०० देखि ६:४८ सम्म महेन्द्रकाल छ। यो जम्मा २ घडी (एक घडीमा २४ मिनेट हुन्छ) अर्थात् ४८ मिनेटको छ । र त्यो ४८ मिनेटलाई चार बराबर भाग लगाउँदा १२-१२ मिनेट बाल, युवा, प्रौढ र वृद्धको भागमा पर्दछ। पहिलो १२ मिनेट अर्थात् ६:०० देखि ६:१२ सम्म बाल महेन्द्रकाल हुने भयो, त्यस्तै दोस्रो १२ मिनेट अर्थात् ६:१२ देखि ६:२४ सम्म युवा महेन्द्र हुने भयो, यसरी नै तेस्रो भागमा अर्थात् ६:२४ देखि ६:३६ सम्म प्रौढ महेन्द्र हुने भयो भने ६:३६ देखि ६:४८ सम्म वृद्ध महेन्द्र हुने भयो । युवा र प्रौढ अवस्थामा त्यसको प्रभाव बढी पर्दछ। यदि सम्भव हुन्छ भने बाल र वृद्ध अवस्थालाई छाडेर कार्यमा सफलताको लागि युवा र प्रौढ अवस्था नै रोज्नुपर्दछ तर सम्भव छैन भने बाल र वृद्धको पनि प्रयोग गर्न सकिन्छ ।

**राहुकाल:–** मिहिराचार्यले काल ज्ञानमा 'राहुकाल'लाई पनि समावेश गर्नुभएको छ। उहाँका अनुसार राहुकालले प्रत्येक कार्यलाई दूषित गर्दछ। यदि निश्चित समयमा महेन्द्रकाल चलिरहेको छ तथा त्यसै समयमा राहुकालको पनि प्रवेश भएको छ भने त्यो महेन्द्रकाल पनि आफैमा व्यर्थ हुन जान्छ। अत: राहुकालमा अरू श्रेष्ठ भनिएका कालहरू परेमा भुलेर पनि कुनै प्रकारको शुभकार्य प्रारम्भ गर्नु हुँदैन ।

उदाहरणको लागि चैत्र महिनाको आइतबार ४:३० देखि ६:०० बजेसम्म राहुकाल छ। यो काल सर्वथा वर्जित छ। यसैप्रकार बुधबारको दिन ११:३६ देखि १:१२ सम्म अमृतकाल छ जुन प्रत्येक कार्यको लागि अनुकुल एवं शुभ मानिन्छ तर यसै समयमा १२:०० बजेदेखि १:३० बजेसम्म राहुकाल पनि छ । त्यसैले अमृतकाल भए पनि १२:०० बजेदेखि १:३० बजेसम्म कुनै पनि प्रकारको शुभ कार्य गर्नु हुँदैन ।

काललाई गणना गर्दा घडीमा गरिने भएता पनि पाठकवर्गलाई सजिलो होस् भनेर अगाडि घण्टा र मिनेट मात्र उल्लेख गरिएको हो। मिहिराचार्यले कालज्ञान विवरणमा यो स्पष्ट गर्नुभएको छ कि प्रत्येक दिनको प्रारम्भ बिहान ६:०० बजेबाट नै सम्झनु पर्दछ। साथै रात्रिको प्रारम्भ साँझ ६:०० बजेबाट मानिएको छ । सद्गुरुदेवले स्वयं आफ्नो विगतको अनुभवबाट यो कुरा निश्चित गर्नुभएको छ कि यदि काल ज्ञानको सहारा लियौं भने निश्चय नै हामीले आफ्नो प्रत्येक उद्देश्यमा पूर्ण सफलता प्राप्त गर्न सक्दछौं ।

मिहिराचार्यले बाह्र महिनालाई तीन भागमा विभाजन गर्नुभएको सन्दर्भ माथि नै आइसकेको छ जसमध्ये पहिलो भाग (चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिना)

**ना तीर्थि नक्षत्रं न योग करणं तथा**
**शिवस्थाज्ञां समादाय दैवं कार्य विचिंतयेत**
**न वारादि ग्रहाश्चैव ब्यतिपातौ न विष्टि च ।**
**दिवशूलं चन्द्रमा नैव तथा पंचांग दर्शनम् ।।**
**माहेन्द्रं अमृतं वक्रं शून्यं क्षण चतुष्टयम् ।**
**क्रियते मिहिराचार्यो योगो द्वाहादि मंगले ।।**
**महेन्द्रो विजयी नित्यं अमृते कार्य शोभनम् ।**
**वक्रे गति बिलम्बस्या च शून्ये च मरणं ध्रुवम् ।**
**ज्योर्तिग्रन्थं समस्तेषु सारमा कृष्य यत्नतः ।**
**क्रियते मिहिराचार्यो योगो द्वाहादि मंगले ।।**
**-मिहिराचार्य**

मा पर्ने कालहरूको तालिका बनाएर सँगै प्रस्तुत गरिएको छ ।

## सूक्ष्म काल विवरण:

महर्षिहरूले यी चार प्रकारका कालहरूको पनि सूक्ष्म विवेचना गरेर ५-५ मिनेट अन्तरको फललाई पनि स्पष्ट गरेका छन् । यद्यपि यो सूक्ष्मकाल विवेचन पूर्णत: गोप्य रहेता पनि पाठकहरूको लाभार्थ यसलाई यहाँ स्पष्ट गरिन्छ। ध्यान रहोस्– सूक्ष्म काल विवरणमा बारको महत्त्व हुँदैन, जुनसुकै बार भए पनि फरक पर्दैन । महर्षिहरूले यो सूक्ष्म विवेचनालाई १-१ घण्टाको क्रममा राखेका छन् । एक घण्टापछिको समयमा पुन: यही क्रम शुरु हुन्छ ।

उदाहरणका लागि चैत्र महिनाको आइतबार प्रात: ६:४८ देखि १०:०० बजेसम्म अमृतकालको समय छ । जुन ३ घण्टा १२ मिनेटको छ । यसको सूक्ष्म विवेचना यसप्रकार बन्दछ–

**६:४८ देखि ६:५३ सम्म (५मिनेट): यात्रा महत्त्वपूर्ण कार्यादिको फल।**
**६:५३ देखि ६:५८ सम्म (५मिनेट): साधना कार्य, किनबेच आदिको फल।**
**६:५८ देखि ७:०३ सम्म (५मिनेट): व्यापार कार्य, शुभ समय आदि फल।**
**७:०३ देखि ७:०८ सम्म (५मिनेट): विजय कार्य, धनसङ्ग्रह आदि फल**

यसै प्रकारले एक घण्टा पुगेपछि यो क्रम तथा फल फेरि प्रारम्भ हुन्छ। अर्थात् ६:४८ देखि ६:५३ सम्मको जुन फल छ त्यही फल ७:४८ देखि ७:५३ को हुन्छ।
यो जुन समय छ यात्रा, व्यापार आदि प्रारम्भ गर्नका लागि मान्नुपर्दछ । प्रारम्भ भइसकेपछि त्यसमा जति समय लागे पनि काल विचार गर्न जरुरी हुँदैन । प्रत्येक सूक्ष्म समयको प्रधान देवता र भक्ष पनि दिइएको छ । त्यस समयमा सम्बन्धित देवताको स्मरण गरेर कार्य प्रारम्भ गर्नुपर्दछ तथा सम्बन्धित वस्तु थोरै खाएर कार्य अथवा यात्रा प्रारम्भ गर्नु पर्दछ, जसबाट अनुकुलता मिल्दछ तथा बाधाहरूको निवृत्ति हुन जान्छ । क्रमश: जय गुरुदेव !

## पूजन

भगवान् शिव परम कल्याणकारी देव हुनुहुन्छ । उहाँ परम कारुणिक हुनुहुन्छ । कुनै पनि विधानबाट चाहे शास्त्रोक्त होस् वा वेदोक्त होस्, सामान्य होस् वा असामान्य, सबै विधिबाट उहाँ प्रसन्न हुनुहुन्छ । यसकारण उहाँ महादेव हुनुहुन्छ । शास्त्रमा उहाँको पूजनको जति विधि पाइन्छ त्यति अरू कुनै पनि देवताको पाइँदैन किन भने उहाँ देवाधिदेव हुनुहुन्छ, सर्वस्वरूप हुनुहुन्छ ।

# महाशिवरात्रि पूजन

### पूजनका लागि आवश्यक पर्ने सामग्रीहरू-

जल, केशरी, चंदन, अक्षता, फूलमाला, बेलपत्र, दूबो, पञ्चामृत (दूध, दही, मह, घ्यू, चिनी), यज्ञोपवीत, फलफूल, मिठाई, धूप, बत्ती, कपूर, पान, सुपारी, ल्वाङ, अलैंची, दक्षिणा, जलपात्र तथा अन्य पूजन सामग्री ।

**भगवान् शिवको पूजन शुद्ध आसनमा पूर्व वा उत्तरतर्फ फर्की बस्नुपर्छ । आफ्नो सामानलाई एउटा सानो काठको चौकी (पिर्का) माथि सेतो कपडा ओछ्याएर राख्ने र परमपूज्य सद्गुरुगुरुदेव र भगवान् शिवको फोटो स्थापित गरी ती दुवै फोटोको अगाडि शिवलिंग स्थापना गर्ने । त्यसपछि धूप दीप बाल्नुहोस् ।**

### आचमन

दाहिने हातमा जल लिएर निम्न मन्त्र उच्चारणसँगै जल पिउनुहोस् ।

**ॐ केशवाय नमः॥ ॐ माधवाय नमः॥ ॐ नारायणाय नमः॥**

यसपछि हात धुनुहोस् ।

### पवित्रीकरण

**ॐ अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपि वा ।**

**यः स्मरेत् पुण्डरीकाक्षं स बाह्याभ्यान्तरः शुचिः ॥**

### संकल्प

दाहिने हातमा जल लिनुहोस् । त्यसमा अक्षता, पुष्प आदि मिलाएर निम्न मन्त्र भन्दै संकल्प गर्नुहोस् ।

ॐ **विष्णुर्विष्णुः विष्णुः**, अद्य ... (आफ्नो नाम मनमनै भन्नुहोस्) **मम सर्वारिष्ट निरसनपूर्वकसर्वपापक्षयार्थ श्रीसाम्बसदाशिवप्रीत्यर्थं भगवतः श्रीसाम्बसदाशिवस्य पूजनमहं करिष्ये ॥**

जल भूमिमा वा अन्य कुनै पात्रमा छोडिदिनुहोस् ।

### गणेश स्मरण

**गजाननं भूतगणादिसेवितं कपित्थजम्बूफलचारुभक्षणम्। उमासुतं शोकविनाशकारकं नमामि विघ्नेश्वरपादपंकजम् ॥**

### गुरु स्मरण

**गुरुब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**

**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

### भगवान् शिवको ध्यान

**असित गिरिसमं स्यात् कज्जलं सिन्धुपात्रे,**

**सुरतरुवरशाखा लेखिनी पत्रमूर्वी ।**

**लिखति यदि गृहीत्वा शारदा सर्वकालं;**

**तदपि तव गुणनामीश पारं न याति ॥**

यसपछि भगवान् शिवलाई बेलपत्र चढाउनुहोस् ।

**आवाहन**- दाहिने हातमा अक्षता लिनुहोस् ।

**आवाहयामि देवेशमादिमध्यान्तवर्जितम्**

**आधारं सर्वलोकानामाश्रितार्थ प्रदायिनम् ॥**

**ॐ उमामहेश्वराभ्यां नमः आवाहनं समर्पयामि ।**

अक्षता अर्पण गर्नुहोस् ।

**आसन**- थालीमा फूल राख्नुहोस् ।

**विश्वात्मने नमस्तुभ्यं चिदम्बरनिवासिने ।**

**रत्नसिंहासनं चारु ददामि करुणानिधे ॥**

**ॐ उमामहेश्वराभ्यां नमः आसनार्थे पुष्पं समर्पयामि ॥**

**पाद्य**- दुई आचमनी जल चढाउनुहोस् ।

**नमः शर्वाय सोमाय सर्वमंगल हेतवे ।**

**तुभ्यं संप्रददे पाद्यं श्रीकैलास निवासिने ॥**

**ॐ उमाहेश्वराभ्यां नमः पादयोः पाद्यं समर्पयामि ।**

**अर्घ्य**- हातमा जल लिएर त्यसमा गन्ध, अक्षता, पुष्प मिलाएर अर्पण गर्नुहोस् ।

**अनर्घफलदात्रे च शास्त्रे वैवस्वतस्य च ।**
**तुभ्यमर्घ्यं प्रदास्यामि द्वादशान्तनिवासिने ॥**
**ॐ उमामहेश्वराभ्यां नमः हस्तयोरर्घ्यं समर्पयामि ॥**

**आचमन**- तीन आचमनी जल चढाउनुहोस् ।
**अशेषजगदाधार निराधार महेश्वर ।**
**ददाम्याचमनं तुभ्यं सुन्दरेश नमोऽस्तु ते ॥**
**ॐ उमामहेश्वराभ्यां नमः आचमनीयं जलं समर्पयामि ॥**

**स्नान**- जल एवं पञ्चामृतले स्नान गराउनुहोस् ।
**गंगाक्लिन्नजटाभार सोमसोमार्धशेखर ॥ नद्या मया समानीतैः स्नानं कुरु महेश्वर ॥ ॐ उमाहहेश्वराभ्यां नमः स्नानीयं जलं समर्पयामि ॥ स्नानान्ते आचमनीयं जलं समर्पयामि ॥ दुग्ध स्नानं समर्पयामि नमः ॥ दधि स्नानं समर्पयामि नमः ॥ घृत स्नानं समर्पयामि नमः ॥ मधु स्नानं समर्पयामि नमः ॥ शर्करा स्नानं समर्पयामि नमः॥ पंचामृत स्नानं समर्पयामि नमः ॥**

**शुद्धोदकस्नान**
**शुद्धं यत् सलिलं दिव्यं गंगाजलसमं स्मृतम् ।**
**समर्पितं मया भक्त्या शुद्धस्नानाय गृह्यताम् ।**
**श्रीसाम्बसदाशिवाय नमः । शुद्धोदकस्नानं समर्पयामि ॥**
शुद्धोदक स्नान गराएपश्चात् शिवलिंगलाई स्वच्छ वस्त्रले पुछेर अर्को थालीमा कुंकुम वा चन्दनले स्वस्तिक बनाएर शिवलिंगको स्थापना गर्नुहोस् ।

**वस्त्र**– रातो वस्त्र चढाउनुहोस् ।
**वस्त्रं समर्पयामि नमः॥ वस्त्रान्ते यज्ञोपवितं समर्पयामि नमः॥ आभूषणं समर्पयामि नमः॥ सुगंधितद्रव्यं समर्पयामि नमः॥**

**गन्ध**- चन्दन चढाउनुहोस् ।
**नमस्सुगन्धदेहाय ह्यवन्ध्यफल दायिने ॥**
**तुभ्यं गन्धान् प्रदास्यामि चान्धकासुरभंजन ॥**
**ॐ उमामहेश्वराभ्यां नमः गन्धं समर्पयामि ॥**

**अक्षता**– अक्षता चढाउनुहोस् ।
**अक्षतान् धवलान् देवसिद्धगन्धर्व पूजित ।**
**सुन्दरेश नमस्तुभ्यं गृहाण वरदो भव ।**
**ॐ उमामहेश्वराभ्यां नमः अक्षतान् समर्पयामि ॥**

**पुष्प**
**तुरीयवनसंभूतं परमानन्दसौरभम् ।**
**पुष्पं गृहाण सोमेश पुष्पचापविभंजनं ।**
**ॐ उमामहेश्वराभ्यां नमः पुष्पाणि समर्पयामि ॥**

**बेलपत्र**
**ॐ उमामहेश्वराभ्यां नमः बिल्वपत्रं समर्पयामि ॥**
यसपछि दाहिने हातमा कुंकुमले रंगाएको अक्षता लिएर निम्न मन्त्र पढ्दै शिवलिंगमा चढाउनुहोस् ।
**ॐ भवाय नमः ॥ ॐ जगत्पित्रे नमः ॥ ॐ मृडाय नमः ॥ ॐ रुद्राय नमः ॥ ॐ कालान्तकाय नमः ॥ ॐ अघोराय नमः ॥ ॐ पशुपतये नमः ॥ ॐ शर्वाय नमः ॥ ॐ विरूपाक्षाय नमः ॥ ॐ त्र्यम्बकाय नमः ॥ ॐ शूलपाणये नमः ॥**
**ॐ उमामहेश्वराभ्यां नमः सौभाग्यद्रव्याणि समर्पयामि नमः ॥**
अबीर आदि चढाउनुहोस् ।

**धूप**– धूप बाली भगवान् शिवलाई अर्पण गर्नुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः धूपं आघ्रापयामि ॥**

**दीप**– बलेको दीयोमा अक्षता चढाउनुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः दीपं दर्शयामि ॥**

**नैवेद्य**– **ॐ उमामहेश्वराभ्यां नमः नैवेद्यं निवेदयामि नाना ऋतुफलानि च समर्पयामि ॥**
अब निम्न मन्त्र भन्दै पाँचपटक जल चढाउनुहोस् ।
**ॐ प्राणाय स्वाहा ॥ ॐ अपानाय स्वाहा ॥ ॐ व्यानाय स्वाहा ॥ ॐ उदानाय स्वाहा ॥ ॐ समानाय स्वाहा ॥**

**ताम्बूल**– **ॐ उमामहेश्वराभ्यां नमः मुखशुद्धचर्थं ताम्बूलं समर्पयामि ॥**
ल्वाङ्ग, अलैंची मिलाएर पान अर्पण गर्नुहोस् ।

**दक्षिणा**– **ॐ उमामहेश्वराभ्यां नमः सांगता सिद्धचर्थं हिरण्यगर्भ दक्षिणां समर्पयामि ॥**

**मंत्र जप**–
**॥ ॐ शं शंभ्वोदभवाय शंकराय ॐ नमः ॥**
रुद्राक्ष वा स्फटिक मालाले यो मन्त्रको ११ माला जप गर्नुहोस् ।

**समर्पण**- यसपश्चात् निम्न मन्त्र पढ्दै भगवान् शिवलाई मन्त्र जप समर्पण गर्नुहोस् ।
**ॐ गुह्यातिगुह्य गोप्ता त्वं, गृहाणास्मत् कृतं जपम् ।**
**सिद्धि र्भवतु मे देव, त्वतप्रसादान् महेश्वरः ॥**

**नीराजन**
अब शुद्ध घ्यूको पाँच बत्ती बनाएर आरती गर्नुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः नीराजनं समर्पयामि ॥**

**पुष्पाञ्जलि**
दुवै हातमा छोडाएको पुष्प लिएर निम्न मन्त्र भन्दै शिवलिंगमा चढाउनुहोस् ।
**हर विश्वाखिलाधार निराधार निराश्रय ॥**
**पुष्पांजलिं गृहाणेश सोमेश्वर नमोऽस्तु ते ॥**
**ॐ उमामहेश्वराभ्यां नमः मंत्र-पुष्पांजलिं समर्पयामि ॥**

**नमस्कार**- भगवान् शिवलाई प्रणाम गर्नुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः नमस्करोमि ॥**
**अनेन कृत पूजाकर्मणा श्रीसंविदात्मकः साम्बसदाशिवः प्रियन्ताम् ॐ तत्सद् ब्रह्मार्पणमस्तु**
यसपछि प्रसाद वितरण गरी स्वयं पनि प्रसाद ग्रहण गर्नुहोस् ।
जय गुरुदेव !

# शिवमानसपूजा

रत्नैः कल्पितमासनं हिमजलैः स्नानं च दिव्याम्बरं
नानारत्नविभूषितं मृगमदामोदाङ्कितं चन्दनम् ।
जातीचम्पकबिल्वपत्ररचितं पुष्पं च धूपं तथा
दीपं देव दयानिधे पशुपते हृत्कल्पितं गृह्यताम् ।।
सौवर्णे नवरत्नखण्डरचिते पात्रे घृतं पायसं
भक्ष्यं पञ्चविधं पयोदधियुतं रम्भाफलं पानकम् ।
शाकानामयुतं जलं रुचिकरं कर्पूरखण्डोज्ज्वलं
ताम्बूलं मनसा मया विरचितं भक्त्या प्रभो स्वीकुरु ।।
छत्रं चामरयोर्युगमं व्यजनकं चादर्शकं निर्मलं
वीणाभेरिमृदङ्गकाहलकला गीतं च नृत्यं तथा ।
साष्टाङ्गं प्रणतिः स्तुतिर्बहुविधा ह्येतत् समस्तं मया
सङ्कल्पेन समर्पितं तव विभो पूजां गृहाण प्रभो ।।
आत्मा त्वं गिरिजा मतिः सहचराः प्राणाः शरीरं गृहं
पूजा ते विषयोपभोगरचना निद्रा समाधिस्थितिः ।
सञ्चारः पदयोः प्रदक्षिणविधिः स्तोत्राणि सर्वा गिरो
यद्यत्कर्म करोमि तत्तदखिलं शम्भो तवाराधनम् ।।
करचरणकृतं वाक्कायजं कर्मजं वा
श्रवणनयनजं वा मानसं वापराधम् ।
विहितमविहितं वा सर्वमेतत् क्षमस्व
जय जय करुणाब्धे श्री महादेव शम्भो ।।

*।। इति श्रीमच्छङ्कराचार्यविरचित शिवमानसपूजा सम्पूर्णा ।।*

हे दयानिधि ! हे पशुपति ! हे देव ! यो रत्ननिर्मित सिंहासन, शीतल जलबाट स्नान, नाना रत्नावलिविभूषित दिव्य वस्त्र, कस्तुरीको गन्धसमन्वित चन्दन, जुही, चम्पा र बिल्वपत्रबाट रचित पुष्पांजलि तथा धूप र दीप यी सबै मानसिक (पूजोपहार) ग्रहण गर्नुहोस् । मैले नवीन रत्नखण्डबाट रचित सुवर्णपात्रमा घृतयुक्त खीर, दूध र दहीसमेत पाँच प्रकारका व्यञ्जन, कदलीफल, शर्बत, अनेकौं शाक, कपूरबाट स्वच्छ र शुद्ध गरिएको मीठो जल र ताम्बूल यी सब मनबाट नै बनाएर अर्पण गरेको छु; प्रभु ! कृपया यसलाई स्वीकार गर्नुहोस् ।

छाता, दुई चमर, पंखा, निर्मल ऐना, वीणा, भेरी, मृदङ्ग, दुन्दुभीको वाद्य, गाना र नृत्य, साष्टाङ्ग प्रणाम, नानाविधि स्तुति- यी सबै म संकल्पबाट नै हजूरलाई अर्पण गर्दछु; प्रभु ! मेरो यो पूजा ग्रहण गर्नुहोस् । हे शम्भो ! मेरो आत्मा हजूर हनुहुन्छ, बुद्धि माता पार्वती हनुहुन्छ, प्राण हजूरका गण हुन्, शरीर हजूरको मन्दिर हो, सम्पूर्ण विषयभोगको रचना हजूरको पूजा हो; यसप्रकारले मैले जुन जुन क्रियाकलापहरु गर्दछु ती सबै हजूरकै आराधना हुन् ।

हातहरुबाट, गोडाहरुबाट, वाणीहरुबाट, शरीरबाट, कर्मबाट, कर्णहरुबाट, आँखाहरुबाट अथवा मनबाट जानी नजानी मैले जे जे अपराधहरु गरेको छु, हे करुणासागर महादेव शम्भो ! त्यसका लागि हजूरले क्षमा गर्नुहोस् । हजूरको जय होस्, जय होस् ।

# सञ्जीवनी तन्त्र

*(परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू संन्यास जीवनमा रहनुहुँदा त्रिजटा अघोरीबाट सञ्जीवनी विद्या प्राप्त गर्नुभएको प्रसंग यहाँ उल्लेखनीय छ ।)*

त्यस दिन म पहाडको दक्षिणतर्फ घुम्न निस्कको थिएँ । घरबाट निस्केको धेरै दिन भएको थियो र अकस्मात् घरको याद आइरहेको थियो । त्यहाँ रहेको ठूलो ढुङ्गामा धेरै माथि चढेर आएको थिएँ । उठेर भैरव मन्दिरतर्फ बढें । आज त्रिजटासँग बसेर काम्य चेटक प्रयोग सिद्ध गर्नु थियो । म भैरव मन्दिर नजिक आएँ, तब त्यहाँको दृश्य देखेर दंग परें । त्रिजटाले कतैबाट मोटो बलियो बोको उठाएर ल्याएका थिए र उनले दुई हातले बोकोलाई उठाएर भुइँमा पछारेर भैरवलाई बलि चढाए । त्यो बोको टाउको फुटेर मऱ्यो ।

त्रिजटाले मलाई हेरेर हि...हि... गरेर हाँस्न लागे । उनका पहेँला-पहेँला दाँत अत्यन्तै कुरूप देखिन्थे । उनले भने, 'भैरव प्रसाद हो, तँ त ब्राह्मण कुमार होस्, चाख्न त चाख्दैनस् ?' मैले यो विभत्स दृश्य देख्न सकिनँ । मैले भनें, 'त्रिजटा, म आजै यहाँबाट जान्छु, यति विभत्स, यति पाप, उफ् !' मेरो आँखा एकातर्फ घृणाले खुम्चिरहेको थियो भने अर्कोतर्फ त्यो अकाल मृत्युको झलक आइरहेको थियो ।

त्रिजटाले बोकालाई घिसारेर मेरो नजिक लिएर आए । यद्यपि त्यसको टाउको फुटेको थियो तर रगत भने बगेको थिएन । वाराही प्रयोगबाट रक्तस्राव रोकिएको थियो । उनले भने, 'तँलाई कस्तो लाग्यो ? मन परेन भने म यस्तो गर्दिन तर तँ नजा ।' अझैसम्म मेरा आँखा घुमिरहेका थिए । आँखाबाट आँसु बर्सन लागे । म उठेर कोठामा गएँ अनि आफ्नो धोती-कुर्ताको झोला बोकें । यसबाहेक मसँग अरू के नै थियो र !

उनले भने, 'के तँ साँच्चिकै जान्छस् ?'

मैले भनें, 'अँ त्रिजटा ! यस प्रकारको वातावरणमा म त एक मिनेट पनि बस्न सक्दिन । त्यस बोकाले के बिगारेको थियो र त्यसलाई मारेको ?'

त्रिजटाले भने, 'यसलाई फेरि जीवित गराइदिऊँ ?'

यो मेरो लागि सर्वथा अप्रत्याशित कुरा थियो । के मरिसकेको बोकालाई फेरि जीवित बनाउन सकिन्छ ? के त्यसको फुटेको टाउको यति छिट्टै जोडिन्छ ? सायद हुन पनि सक्छ । त्रिजटा अघोरीसँग असम्भव भन्ने शब्द प्रयोग गर्न विचार गर्नैपर्छ ।

- के यो जीवित हुन सक्छ ?

- किन हुन सक्दैन ? काल भैरवका लागि असम्भव के छ ?

- त्रिजटा, म यो हेर्न चाहन्छु । यदि यस्तो भयो भने त यो विश्वको आठौँ आश्चर्य नै हुनेछ ।

त्रिजटाले हो...हो... गरेर हाँस्दै भने- तैँले बाघ र बिरालोको कथा सुनेको छस् ?

मैले भनें- बाघ र बिरालोको कथा ?

हो ! बाघ र बिरालोको कथा । बिरालोलाई बाघको फुपु र गुरु भनिन्छ, बाघको आग्रहमा बिरालोले उसलाई सारा विद्या सिकाएर निपुण बनायो ।

एकदिन बाघले सोच्यो कि बिरालोले शिकार गर्ने सारा प्रक्रिया सिकाइसक्यो, योभन्दा म बलियो पनि छु, किन आज बिरालोलाई नै झम्टेर त्यसको शिकार गरी आहार नबनाऊँ ?

बाघले यस्तो सोचेर जब बिरालोलाई झम्ट्यो, बिरालो उफ्रेर रूखमा चढ्यो, बाघ विवश भएर त्यसलाई हेरेर मात्र चित्त बुझाउनुपऱ्यो ।

बाघले सोध्यो- गुरुजी ! यो त तिमीले मलाई सिकाएकै छैनौ, रूखमा चढ्ने विद्या मलाई कहिले सिकायौ ?

बिरालोले मुस्कुराएर भन्यो- यदि मैले यो सिकाइदिएको भए आज तेरो पञ्जाबाट कसरी बाँच्थें ?

त्रिजटा खित्का छाडेर हाँसे ।

म पनि हाँस्न पुगें । मैले भनें- त्यसो भए यसै कारणले मसँग यसको चर्चा नगरेको ?

-हैन, म त ठट्टा गरिरहेको थिएँ । यसलाई सञ्जीवनी तन्त्र भनिन्छ जसलाई 'काम्य प्रयोग'पछि नै सिक्न सकिन्छ । काम्य प्रयोग तैँले भर्खर त सिकेको छस् । अत: यो तन्त्र तँलाई सिकाउनै लागेको थिएँ तर तँ जाने तयारी गर्दैछस् ।

मैले सोँचे त्रिजटा कति चतुर छन्, मलाई रोक्नका लागि कति चतुऱ्याइँ गर्दैछन् । तर कति सरल र निष्कपट छन् । आफ्नो सामान एकातिर फ्याँकेर म तुरुन्त गएर उनीसँग टासिएँ । मैले देखें उनको आँखामा प्रेमाश्रुका थोपा टिलपिल गरिरहेका थिए ।

त्रिजटा कोठामा गए र भुइँमा अलिकति खनेर एउटा हाँडी उठाएर ल्याए जसमा कुनै गाढा लेपजस्तो थियो । उनले औँलाले त्यस लेपलाई बोकाको फुटेको शिरमा भरिदिए र त्यसलाई आफ्नो हातले थिचेर जोडे ।

सायद ४ वा ५ मिनेट यसप्रकार शिरलाई थिचे । आश्चर्य! बोकाको फुटेको शिर यसप्रकार जोडियो, मानौँ कहिल्यै फुटेकै थिएन । मेरो आग्रहमा उनले मलाई त्यो लेप तयार गर्ने विधि पनि सिकाइदिए । सामान्य जीवनमा पनि कुनै धारिलो हतियारले गहिरो घाउ लाग्न पुग्यो भने यो

लेप राखेर यसैप्रकार गरियो भने यसैगरी निको हुन्छ र पछि घाउ कहाँ थियो भनेर थाहा पाउनै सकिँदैन ।

यसभन्दा पनि आश्चर्यको कुरा यो थियो कि उनले मेरो सामुन्ने नै बोकालाई सुताएर सञ्जीवनी तंत्र गरे, उनको प्रयोग लगभग आधा घण्टासम्म चल्यो । पहिले बोकामा हल्का स्पन्दन भयो र बिस्तारै चलमलाउन लाग्यो र दश मिनेटपछि त जुरुक्क उठेर उभियो ।

आजका सामान्य मानिसले यस कुरामा विश्वास नगर्लान् तर जुन घटना मेरो आँखाअगाडि घट्यो त्यसलाई म कसरी झूटो भनुँ ! केही दिनमा उनले मलाई यो तन्त्र पनि बिना हिच्किचाहट सिकाइदिए तर यसलाई सिद्ध गर्न अत्यन्त कठिन र दुष्कर छ ।

# गुरु गोरखनाथद्वारा सञ्जीवनी प्रयोग

गुरु मत्स्येन्द्रनाथको सङ्गतबाट मैनाकिनी रानीलाई मौनीनाथ पुत्रको प्राप्ति पनि भएको थियो । एकदिन मत्स्येन्द्रनाथनजिक रानी मैनाकिनी, मौनीनाथ र गोरखनाथ बस्नुभएको थियो। तब गोरखनाथसँग मत्स्येन्द्रनाथले भन्नुभयो– “बाबु ! मौनीनाथले धेरै दिनदेखि स्नान गरेको छैन । यसलाई नदीमा लगेर राम्ररी स्नान गराएर ल्याऊ ।” गुरु गोरखनाथ मौनीनाथलाई लिएर नदीमा जानुभयो र उसका दुईवटा खुट्टा समातेर उठाउनुभयो । तब ऊ रुन लाग्यो तर रुवाइको कुनै वास्ता नगरेर उसलाई ढुङ्गामा पछार्न लाग्नुभयो जसरी धोबीले लुगा पछार्छ । तीन-चारपटक पछारेपछि नै मौनीनाथको प्राण उडेर गयो। त्यसपछि पनि उसको छालालाई रगडी-रगडी धुनुभयो । फेरि त्यसलाई राजमहलमा लगेर छतमा सुकाउनको लागि टाँगिदिनुभयो। जब गुरु मत्स्येन्द्रनाथले मौनीनाथलाई देख्नुभएन, तब उहाँ भन्नुहुन्छ– “बाबु गोरख ! मौनी कहाँ गयो ?” गोरखनाथ भन्नुहुन्छ– “तपाईंले नै त उसलाई राम्रोसँग स्नान गराउने आज्ञा दिनुभएको थियो । यसकारण मैले उसलाई स्नान गराएर छतमा सुकाउनको लागि राखिदिएको छु । छतको घाममा उसको छाला राम्ररी सुक्नेछ ।” मत्स्येन्द्रनाथले ध्यान लगाएर हेरेपछि थाहा पाउनुभयो कि मौनीनाथ मरिसकेको छ ।

मैनाकिनी पनि गुरु गोरखनाथको कुरा सुनेर चकित भइन् र मत्स्येन्द्रनाथलाई साथमा लिएर छतमा पुगिन् । मौनीनाथ मरिसकेको थियो र उसको छाला घाममा सुकिरहेको थियो । यो देखेर रानी रुँदै-रुँदै बेहोश भइन् । जब रानीलाई होश आयो तब मत्स्येन्द्रनाथ भनिरहनुभएको थियो– “अरे निर्दयी गोरख, तैँले त यस अबोध बालकलाई नै मारिस्, तैँले त यसको प्राण नै हरण गरिस् ।” रानी मैनाकिनीले रुँदै-रुँदै भनिन्– “प्राण मात्र होइन, अञ्जर-पञ्जरसमेत नष्ट गऱ्यो । हाडसिवाय अरू केही छैन ।” यसपछि गोरखनाथ भन्नुहुन्छ– “गुरुजी, तपाईंको आज्ञा पालन गर्दा मेरो के दोष ?” मत्स्येन्द्रनाथ क्रोध दर्शाउँदै भन्नुहुन्छ– “अरे मूर्ख, स्नानको अर्थ मार्नु भनेर कुन किताबमा लेखेको छ ?” मैनाकिनीले भनिन्– “तपाईंले त भन्नुहुन्थ्यो गोरखनाथ सतगुणी विद्वान् छ । यसै तपाईंको शिष्यले शत्रु सम्झेर मेरो छोरालाई मारेको हो ।” गोरखनाथले बडो धीरताका साथ भन्नुभयो– “हे माता ! न कसैले कसैलाई मार्दछ, न कसैले मार्दैमा कोही मर्दछ । त्यसैले यस नाशवान् वस्तुको शोक गर्नु नै बेकार छ ।” मत्स्येन्द्रनाथ भन्नुहुन्छ– “हत्यारा यहाँ उपदेश दिन्छस् ? हत्या गरेर ज्ञानीपनको नाटक गर्दछस् ?” रानीले भनिन्– “के म अब जिउँदो रहन सक्छु ?” गोरखनाथले धीरतापूर्वक भन्नुभयो– “माताजी अब गर्न पो के नै सकिन्छ र ? जुन आएको थियो, त्यो मरेर गयो । मलाई जे सजाय दिन चाहनुहुन्छ, दिनुहोस् ।” मत्स्येन्द्रनाथ भन्नुहुन्छ– “म तँलाई आज्ञा दिन्छु– तँ आफ्नो सामर्थ्यले मौनीनाथलाई जीवनदान दे ।” आफ्नो गुरुको आज्ञा शिरोपर गरी गोरखनाथले सञ्जीवनी मन्त्रको भस्मलाई अभिमन्त्रित गरेर मौनीनाथको छालामा छर्कनुभयो। फेरि के थियो र, एउटै अनुहारका एकसय आठ मौनीनाथ उत्पन्न भए । यिनमा आफ्नो मौनीनाथ कुन हो भनेर उनले चिन्न सकिनन् । मैनाकिनी रानीले भनिन्– “बाबु गोरख, तिमी बडा मायावी छौ। अब आफ्नो माया समेटेर मलाई मेरो मौनीनाथ देऊ । मैले यत्तिका मौनीनाथमा आफ्नो मौनीनाथ चिन्न सकिनँ।” गोरखनाथ भन्नुहुन्छ– “माता, जब तपाईं आफ्नो चीजलाई चिन्न सक्नुहुन्न तब त्यसलाई आफ्नो भन्ने के अधिकार ?” रानीले भनिन्– “सत्य हो बाबु, यो माया मोह छोडेर पनि छुट्दैन ।” गोरखनाथ भन्नुहुन्छ– “अब म अरू के गर्न सक्छु ?” रानीले भनिन्– “तिमी चमत्कारी हौ बाबु, सबै कुरा गर्न सक्छौ । मलाई त आफ्नो मौनीनाथ नै चाहियो ।” गुरु गोरखनाथले माया समेट्नुभयो र असली मौनीनाथ रानीलाई जिम्मा लगाइदिनुभयो । यस अपूर्व घटनाबाट मैनाकिनी अति प्रसन्न भइन् र गुरु गोरखनाथलाई सम्मानको दृष्टिले हेर्न लागिन्। जय गुरुदेव !

*परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।*

# श्री गोरख महापुराण

## अन्ठाउन्नौं भाग

निर्माण कायमा जुन प्रकारले बुद्धको निर्माण काय आभिर्भाव (उत्पन्न) हुन्छ त्यसै प्रकार साधकमा धर्म काय संभोग चक्रमा महासुख कायको अभिव्यक्ति हुन्छ । यो नै दिव्य देहको प्रकटन हो । यस स्थितिमा दिव्य चक्षु, दिव्य स्रोत, सर्वज्ञत्व, विभुत्व आदि महागुणहरूको आविर्भाव हुन्छ, सबैभन्दा अन्तमा सम्यक् सम्बुद्धरूपमा बोधिचित्तको स्फूर्ति हुन्छ । आनन्द नै अमृत घर हो । चन्द्रकलाबाट त्यसको उन्मेष हुन्छ । बोधिचित्त जब अवधूति मार्गबाट माथि जान्छ त्यस समय भिन्न-भिन्न प्रकारका आनन्दको उन्मेष हुन्छ । षोडष कलात्मक चन्द्रको प्रथम पाँच कलाहरूबाट दोस्रो प्रकारको दुई गुना आनन्दको उद्‌भव हुन्छ । अमृता नामक षोडशी कला महासुख चक्रमा सहजानन्दरूपमा अनुभूति हुन्छ । यही अमृतकलाले मानव देहमा अमरता ल्याउँछ । अहज साधक वैष्णवजन पनि काय साधनलाई साधनाको नै उद्देश्य मन्दछन् । तिनको कथन छ- देहमा चार सरोवर अभिव्यक्त हुन्छन् । काय साधन सिद्ध भएबाट यो सरोवर अभिव्यक्त हुन्छ । दुई सरोवर दायाँतर्फ छन् र दुई बायाँतर्फ । यो प्रकृति पुरुष रूप हो । मान सरोबर तथा काम सरोवर बायाँ छन्, प्रेम सरोवर र क्षय सरोवर दायाँ छन् । सन्तवाणी बताउँछ कि मान सरोवरमा स्नान गर्नाले व्यापक मनोराज्यको प्राप्ति हुन्छ । यसपछि त्यसलाई पार गरेर महाशून्यको भेदन गर्नुपर्छ अन्यथा चिदानन्दमय भगवान्‌को धामको प्राप्ति हुँदैन । महाप्रलयमा समस्त जगत्‌को नाश भएपछि पनि केवल अक्षय सरोवर नै बाँकी रहन्छ । अक्षय सरोवर नै भगवद्धाम हो । मानव देहमा यो स्थान शिरको सहस्रदल कमलमा छ । यो नै सहजपुर हो । अनन्तकोटि ब्रह्माण्डको भेद भएपछि यसको प्राप्ति हुन्छ । यहाँ काल, जरा र मृत्यु छँदै छैन । सहज साधक गण काय सिद्धिको लागि तीन भूमि मान्दछन् । पहिलो प्रवर्तक भूमि, दोस्रो साधक भूमि र तेस्रो सिद्ध भूमि । पहिलो भूमिमा नाम साधना तबसम्म गर्नुपर्दछ जबसम्म महासिद्धि मिल्दैन, तबसम्म प्रवर्तक अवस्थालाई पार गर्न सम्भव छैन । दोस्रो भूमिमा भाव साधना र प्रेम

साधना । भाव प्राप्त भएपछि नै त्यस देहमा साधन चल्दछ । सिद्ध अवस्थामा तेस्रो भूमिमा रसमय तनु प्राप्त हुन्छ र भगवान्को नित्य लीला मण्डलमा प्रवेश मिल्दछ । मृत्युको समय जीव नयाँ शरीर ग्रहण गरेर नै, जीवले जीर्ण (पुरानो) कायलाई त्याग्दछ । यही नै वस्तु स्थिति हो । यसरी नयाँ शरीर धारण गर्नाले शरीरको शुद्धि त अवश्य हुन जान्छ तर परमशुद्धि यसबाट पनि आउँदैन, प्राकृत सत्त्वमा सत्त्वतम अवश्य नै रहन जान्छ। त्यस्तै नै देहबाट देहान्तर लाभ भएपछि पनि त्यसमा अशुद्ध मायाको लेश (थोरै अंश) रही नै रहन्छ, शुद्ध मायाको योग त्यसमा आउँदैन । सिद्ध सम्प्रदायका अनुसार माया तीन प्रकारको हुन्छ- अशुद्ध माया, शुद्ध माया र महामाया । प्राय: चित्त शक्तिरूपा अशुद्ध सत्त्व विकार स्वभाव, शुद्ध सत्त्व तर अविकारी, यसको लागि सम्यक देह शुद्धि गर्नको लागि अशुद्ध माया जात देहलाई शुद्ध माया कोटिमा ल्याउनु परम आवश्यक छ । जब यसप्रकारको शुद्धि हुन जान्छ तब मायाबाट हुने विकार नष्ट हुन जान्छ। तर शुद्ध मार्गमा अवस्थित मुक्त पुरुषको अनुग्रहबिना शुद्ध देहको उत्पत्ति सम्भव छैन । जबसम्म अशुद्ध प्राकृत देह शुद्ध माया देहको रूपमा परिणत हुँदैन तबसम्म संसार तथा मृत्युको निवृत्ति हुँदैन । कर्मको अभाव भएपछि पनि अशुद्ध देहको बीज त्यस समयसम्म रहन्छ अतएव संसरण त हुन्छ नै तर त्यो संसरण स्वेच्छाधीन हो । यो कुनै कर्मको अधीन हुँदैन ।

तर सूक्ष्म दृष्टिले हेर्ने हो भने सूक्ष्म कर्म त्यहाँ पनि रहन्छ । शुद्ध मार्गमा अवस्थित पुरुषको कृपा प्राप्त गर्नाले बीज लाभ हुन्छ तथा अशुद्ध देहको शुद्धि पनि हुन्छ। मुक्त पुरुषको अनुग्रह (कृपा) बाट अशुद्ध देहको शुद्धि पनि हुन्छ। मुक्त पुरुषको अनुग्रहबाट अशुद्ध माया शुद्ध मायामा बदलिन जान्छ। तब देहलाई पनि अमरता प्राप्त हुन्छ ।

यो शुद्ध देह अमृतकलामय प्रशावतनुको नामबाट प्रसिद्ध छ । प्रशावतनुको प्राप्ति नै जीवन मुक्ति हो। यस्तो जीवन मुक्त पुरुष जीव भएर पनि ईश्वर कल्प हो । ऊ शुद्ध र अशुद्ध जगत्को संधिस्थानमा रहन्छ । अशुद्ध जगत्मा त्यसको सम्बन्ध थोरै समयको लागि नै रहन्छ । उसको परामुक्ति नजिकै हुन्छ । तब उसलाई परामुक्ति मिल्दछ । उसले चिन्मय ज्योतिस्वरूप अवस्थान गर्दछ र देह ज्योतिरूप रहन्छ । तब मायाको सम्बन्ध रहँदैन र शुद्ध माया पनि त्यस समय रहँदैन, जीवन मुक्तको देह शुद्ध मायामय हो । परमुक्त पुरुषको देह ज्ञानमय हुन्छ । तब आत्मा र देहको भेद समाप्त हुन जान्छ। प्रणव देहधारी जीवमुक्त पुरुष, मुमुक्षु मायाग्रस्त जीवहरूलाई मायाको गर्भबाट उद्धार गर्दछन्। शुद्ध वासनाको मुक्ति भएपछि उसले शुद्ध माया राज्यको पनि त्याग गरिदिन्छ । उसको शरीर अकस्मात् दिव्य लोकमा नै तिरोहित हुन्छ। सिद्धहरूको कथन छ कि देहमा रहेर नै जीवन मुक्तिको अवस्था प्राप्त गर्नुपर्दछ । मृत्युभन्दा अगाडि नै, पछि होइन। सिद्ध मतबाट मनुष्यको कर्तव्य हो- देह शुद्धि र चित्त शुद्धि । दुवैको मिलनबाट नै परम सत्त्वको अभिव्यक्ति हुन्छ । रससिद्ध हामी नाथयोगीहरूको यही नै मत छ र सिद्धान्त पनि यही हो। प्रतीच्य देशमा पनि काय सिद्धिको सम्बन्धमा अनुशीलन हुन्छ । ती देशहरूको गुप्त संस्कृति र प्राचीन इतिहासको आलोचनामा यस विषयमा राम्ररी जानकारी मिल्दछ । त्यहाँ पनि शब्दद्वारा नै दिव्य देह प्राप्तिको कुरा बताइएको छ । ज्ञानलाई ज्ञेयमा बदलिदिने शक्ति नै महाज्ञानको लक्षण हो। मनुष्यको शरीरमा अनादि असङ्ख्य शक्ति सुतिरहेको छ। ती शक्तिहरूलाई नजगाई ज्ञान महाज्ञानमा परिणत हुन सक्तैन । यसको फलस्वरूप आत्म विकास पनि हुँदैन र त्यसको अभावमा स्वरूप प्रतिष्ठा पनि हुन सक्तैन । शक्तिको जागरणको उपाय अन्तर्दृष्टिको उन्मिलन हो । उन्मिलन शक्तिहरूद्वारा नै मनुष्य जीवनको सार्थकता आउँछ तथा जरा-मरणादि विकार वर्जित एवं मल र पापलेशहीन दिव्य देहको उद्भव हुन्छ । यसैलाई द्विजत्व दिने दोस्रो जन्म सम्झनुपर्दछ । हामीकहाँ जसरी उपनयन संस्कारको प्रभावबाट अथवा दीक्षाको फलस्वरूप शुद्ध देहको उदय हुन्छ त्यसरी नै अरू सम्प्रदायहरूमा पनि दीक्षाको प्रभावबाट शुद्ध देह मिल्दछ ।

अब प्रश्न यो छ कि अन्तर्दृष्टिको उन्मिलन कसरी हुन्छ । यसको उत्तरमा बुझ्नुपर्दछ कि यस सम्प्रदायका अनुसार पूर्ण सत्य, अखण्ड एक रस स्वभाव हो जुन महासाम्यरूप छ । सबै प्रकारका कारणहरू अगोचर हुनाले त्यो निर्विकल्प-स्वरूप वस्तु द्वैत पनि होइन अद्वैत पनि होइन, यस मतानुसार एक अचिन्त्य बाह्य सत्ता स्वीकृत हुन्छ जसलाई हामी विश्व सृष्टिको मूल एक आदि द्रव्य भन्दछौँ। सृष्टि रचनाको समयमा यस सत्तामा क्षोभ उत्पन्न हुन्छ जसको फलस्वरूप त्यो विभक्त भएर सूक्ष्म र स्थूल नाना प्रकारका असङ्ख्य जड अंशहरूमा परिणत हुन्छ । पूर्ण सत्ताको बाहिर क्रमश: नित्य र अनित्य मण्डलको उदय हुन्छ । त्यसमा नित्य मण्डल सत्य र अनित्य मिथ्या हो । पूर्णत्व यी दुवैको अतीत अवस्था हो । नित्य मण्डल निर्विकार छ । अनित्य मण्डल विकारमय छ । नित्य मण्डलमा एकताको भान भएर पनि धेरैको समष्टिगत वैकल्पिक व्यवस्था त्यसमा छ । साङ्ख्यसम्मत प्रकृति त्रिगुणात्मिका छ । तर साम्य

अवस्थामा त्यसमा जुन कोटिको एकता हुन्छ त्यस्तै एकता नित्य मण्डलमा छ । पूर्ण स्वरूपमा जुन एकता छ, साम्यरूप नहुनाले त्यो विलक्षण स्वभाव भएको छ । यो नित्य मण्डललाई श्री भगवान्‌को भावरूप अथवा यसैलाई कल्पनारूप नै सम्झनुपर्दछ जुन सृष्टि रचनाको समय भौतिकरूपमा प्रकट हुन्छ । तर सृष्टिको उन्मेषकालमा यो दुवै मण्डल अव्यक्त अवस्थामा नै रहन्छ। ज्योतिरूप यो मूल शक्ति समस्त जड वस्तुमा निहित छ र त्यसैको प्रभाव भिन्न-भिन्न उपादान भिन्न-भिन्न कार्यरूप प्राप्त गर्दछन् । महाज्ञानको सम्पादनमा यही शक्तिले काम गर्दछ। यसलाई छोड्नाले कुनै पनि निर्माण कार्य हुन सक्तैन । ब्रह्माण्डमा जुनसुकै कुरा पनि देखिन्छ, त्यही सबै कुरा पिण्डमा पनि देखिन्छ । जुन पिण्डमा छ त्यही ब्रह्माण्डमा छ । बाह्य प्रपञ्चमा कारण, सूक्ष्म र स्थूल- यस प्रकार तीन भूमि छन् । पूर्वोक्त अन्तर मण्डल नै कारण भूमि हो, यो ज्योतिर्मय छ । मध्यभूमि मनोमय छ, त्यो सूक्ष्म छ । अन्तिम भूमि भौतिक हो, स्थूल छ । यी सबै प्रकारबाट इन्द्रियग्राह्या छन् । स्थूल र सूक्ष्मको अन्तरालमा एक भूमि छ। कुनै मतहरूमा त्यो स्थूलअन्तर्गत यो कल्पनामय छ । यसप्रकार मानवको अन्त: सत्तामा पनि तीन भूमिहरू छन् । ती कारणरूप, सूक्ष्मरूप र स्थूलरूप तथा कारणादि देहत्रयको नामबाट प्रचलित छन् । कारण देह ज्योतिर्मय छ, अन्तर्दृष्टिद्वारा निरीक्ष्यमाण हुनाले त्यो अण्डाकार प्रभामण्डलको रूपमा प्रतिभात हुन्छ र त्यसमा पूर्ववर्णित ज्योति सुतेको जस्तै रहन्छ । त्यसको उद्दीपन हुँदा त्यसले मानवको अध्यात्म जीवनलाई निर्मल गर्न सक्तछ। जागरणको समय त्यो तीव्र प्रकाश शक्तिको रूपमा बिजुलीको चमकजस्तै सर्पको गतिबाट लड्खडाउँछ । यो शक्ति अमित छ ।

भक्ति योग शास्त्रका ज्ञाता यसलाई कुण्डली भन्दछन् । जब यस शक्तिको कुण्डल भङ्ग हुन्छ तब यो वैद्युति शक्तिले कारण देहभित्र स्थित सत्त्वलाई ग्रहण गरेर ज्योतिर्मय देहको रचना गर्दछ। यो देहको निर्माण कौशल दीक्षाको नामबाट प्रचलित छ। रहस्यविद्‌गण चित्-उज्जल यस देहलाई शब्दबाट अभिहित गर्दछन्। अजर-अमर यस देहलाई सौर (सूर्य) देह पनि भनिन्छ। यस देहमा अचिन्त्य वैशिष्ट्य र वर्तमान हुन्छ । यसको आकार पूर्वोक्त विद्युत् ज्योतिमा निमग्न रहन्छ । योग साधनाको बलबाट र प्रभुको अनुग्रहबाट यो दिव्य मृत्युहीन देह मूल आकारको अनुशरण गर्दै क्रमश: अभिव्यक्त हुन्छ । यो स्वयं प्रकाश देह सुनको ज्योति मण्डिल थाहा लाग्छ । उपनिषद्‌मा वर्णित हिरण्यमय ज्योतिको यो घनीभूत रूप हो ।

अवयवको संघात नभएबाट यो अखण्ड हो, अवयव होइन, यसकारण यसलाई विभक्त गर्न सकिँदैन, यसकारण यो अविनाशी अपरिणामी अजर र अमर छ । स्वयं प्रकाश भएको कारण यसको प्रकाशबाट ब्रह्म आलोकको आवश्यकता हुँदैन। अन्त:करण शक्तिको पनि अपेक्षा हुँदैन । सूक्ष्म मनोमय देह चान्द्र देहको नामबाट परिचित छ । मनको चन्द्रात्मकता हामीकहाँ प्रसिद्ध छ। सौर देह र चन्द्र देह दुवै नै ज्योतिर्मय छन् । यिनको सामान्य भए पनि दुवैमा भेद छ। सौर देह निरावयव अखण्ड हुन्छ, चन्द्र देह सावयव। सावयव (अंग सहित) भएको नाताले यो विनाशधर्मी हुन्छ । सौर देह अविनश्वर छ। स्थूल देह भौतिक हो । यो सबै जान्दछन् । सूक्ष्म देहको छायारूप पनि एक देह हुन्छ, मृत्युपछि कुनै जीव त्यसलाई ग्रहण गर्दछन् । मृत्युभन्दा अगाडि पनि त्यसलाई ग्रहण गर्न सकिन्छ । तर मनुष्यको लागि यो हानिकारक छ। यसकारण यस विषयको आलोचना नै व्यर्थ छ । यस छायामय देह, यसबाट आफ्नो आत्मरक्षा गर्न परम आवश्यक छ ।

फेरि धर्म र जीवनको उन्नति अति कठिन छ । योग शास्त्रमा ज्ञान चक्षुलाई तृतीय नेत्रको नामबाट अभिहित गरिन्छ । पूर्वोक्त सञ्जीवनी शक्तिको प्रभावबाट नेत्रको सूक्ष्म क्रिया उन्मिषित हुन्छ । आत्माको इच्छा शक्तिद्वारा नै कुण्डलिनीको जागरण हुन्छ। कुण्डलिनी जाग्रत भएर नारीगत असङ्ख्य आवरणहरूलाई टाढा गराउँछ र देहलाई पनि विमल बनाउँछ । यही आत्मशुद्धिको उत्तम उपाय हो। शुद्धिको क्रमिक उत्कर्षको फलस्वरूप केन्द्रस्थित सबै चक्र अधिकारमा आउँछन् । आत्मशक्तिको विकासको यही क्रम हो। दिव्य देह प्राप्त गरेर दिव्य जीवन प्राप्त गर्नको लागि ब्रह्मचर्य परम आवश्यक छ । साथसाथै विचार शुद्धि र बोध शक्तिको परिशीलनको आवश्यकता हुन्छ । पवित्र जीवन, चिन्तारहित र एकाग्रताको दिव्य भावमा सहायक हुन्छ। एकाग्रताको आगमनबाट चित्त अन्तर्मुखी हुन जान्छ र सूक्ष्म ध्यानमा प्रवीणता आउँछ जसबाट चित्त शक्तिको विकास हुन्छ तथा इच्छा गर्नेबित्तिकै समाधि प्राप्त हुन्छ । यो समाधि जड समाधिभन्दा केही भिन्न छ । यसमा चेतना लुप्त हुँदैन र स्वनियन्त्रणको सामर्थ्य रहन्छ । प्राचीन योगीहरूको मतबाट स्वीष्टीय यसको नाम हो ।

यो अन्तर योगमार्ग विशुद्ध मनको भावनाद्वारा खुल्दछ। तर कुण्डलिनीको जागरण र प्राण केन्द्रमा जप सम्पद् नहुनाले यो भावना कार्यकारिणी हुँदैन, विशुद्ध तत्त्व ज्ञानको लागि गुप्त शक्तिहरूको प्राप्तिको यही एक उपाय छ। अर्को दोस्रो मार्ग छैन ।

हरि ॐ तत्सत ।

# आत्मिक निवेदन

आत्मीय पाठकवर्ग,

'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिदै प्रबुद्ध, पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ । भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ । तर परमपूज्य सद्‌गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ । पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ ।

प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ । अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं ।

पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तिमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ । तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीँ पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताका लागि प्रेरित गर्न सक्नुहुन्छ ।

यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनहरुलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ । यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ ।

यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो । यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तिमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं ।

यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं ।

वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस् । त्यसपछिको बाँकी काम हामी गर्नेछौं ।

अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं । यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं ।

संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ । त्यसैले परमपूज्य सद्‌गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं ।

पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्‌गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो ।

अस्तु ।

# जीवन-प्रेम

...यसैले मेरो विचारमा प्रेमको कुनै परिभाषा हुँदैन, समाजको बन्धनले यसलाई रोक्न सक्तैन। यसैले म मान्दछु, जहाँ प्रेम छ त्यहाँ केही छैन, मात्र हामफाल्नु पर्दछ, आफैमा डुब्नु पर्दछ। यसो गर्दा सैयौँ मानिसले कानेखुसी गर्लान्, सैयौँ प्रकारका कुरा गर्लान् किनकि मानिसहरू प्रेमको सुगन्धसँग परिचित हुनै सक्तैनन् । उनीहरूले त वासनालाई देखेका छन्, शरीरलाई देखेका छन् । अरू सन्त तथा योगीहरूले त्यस नारी शरीरलाई देखे तर उनीहरूले वासनालाई भक्तिमा ढाले किनकि वासना त कुनै न कुनै रूपमा निस्कन्छ नै, कुनै न कुनै माध्यमबाट प्रकट हुन्छ नै ।

प्रेमको कुनै परिभाषा हुँदैन। प्रेममा कुनै चिन्तन हुँदैन। प्रेम त एउटा अनुभूति हो, एउटा मस्ती हो, आफैमा पूर्णता दिने क्रिया हो, आफैमा परितृप्त हुने भावना हो... र यो परिपूर्णता 'पूर्णता' हो, 'साधना' हो, 'श्रेष्ठता' हो, 'शिष्यता' हो र यही परितृप्तता नै 'गुरुता' हो, यसैले–

–गुरु र शिष्यको प्रेम पनि ठीक त्यसै प्रकारको हो जुन प्रकारको प्रेम वायु र सुगन्धमा हुन्छ ।

–गुरु र शिष्यको प्रेम पनि ठीक त्यसै प्रकारको हो जस्तो धर्ती र वर्षाको पानीको प्रेम हुन्छ ।

किनकि वर्षाबिना धर्तीको कुनै कल्पना हुँदैन, वर्षा हुँदा धर्ती आफैमा सुगन्धित हुन लाग्दछ, त्यो आफैमा परितृप्त हुन जान्छ... र जुन शिष्यले गुरुको फुहार प्राप्त गर्दछ, उसको शरीरबाट सुगन्ध प्रवाहित हुन जान्छ, उसको शरीर आफैमा नाच्न लाग्दछ, उफ्रिन लाग्दछ, उत्साहले परिपूर्ण हुन जान्छ– ठीक त्यसै प्रकारले जसरी हावा बहन्छ ।

...यसैले 'म सुगन्धको प्रवाह हुँ', र 'म तिमीलाई आफ्नो अँगालोमा राख्न आतुर छु', आफैमा लीन गर्न आतुर छु, आफ्नो तन-मनमा, प्राणमा बसाउनका लागि आतुर छु, तर यसभन्दा अगाडि तिम्रो छातीमा, प्राणमा मैले आफैलाई भरिदिन आवश्यक छ... र यसका लागि तिमीले आफ्नो हृदय पक्षलाई खोल्नुपर्ने हुन्छ, वासनाहरूबाट अलग्गिनुपर्नेछ । तिम्रो जीवनमा न पति छन्, न पत्नी छिन्, न बन्धु छन्, न बान्धव नै... कोही पनि छैनन् किनकि यी सबै शारीरिक सम्बन्ध हुन् । जब तिम्रो अनुहार चाउरी पर्न थाल्नेछ, जब शरीरमा दाग देखिन थाल्नेछ, कपाल फुल्न थाल्नेछ, तब यिनीहरूले पिठ्यूँ फर्काउनेछन्, तब यिनीहरू पछाडि

हट्नेछन् । त्यसबेला तिमीले आफ्नो अनुहार ऐनामा हेर्छौ भने अत्यन्तै भयानक देखिनेछ, आफैमा दिग्दार हुनेछ, अनुहार कठोर हुनेछ किनकि तिमीले प्रेम गर्न सिकेकै छैनौ, तिमीले प्रेमको परिभाषा बुझेकै छैनौ, तिमीले आफूलाई महसुस नै गरेका छैनौ, तिमीले आफैलाई बुझेकै छैनौ, तिमीभित्र प्रेमको अंकुर पलाएकै छैन । प्रेमको अंकुर नपलाएसम्म जीवन-पथको यात्रा प्रारम्भ नै हुँदैन । त्यस जीवन-पथको यात्राको लागि प्रेम पहिलो तथा अन्तिम आधार हो ।

म तिमीलाई यो पहिलो आधारबाट आरम्भ गरेर त्यस आनन्द पथतर्फ अग्रसर गरिरहेको छु । म तिमीलाई बुझाइरहेको छु– प्रेम तिम्रो जीवनको ध्येय, धारणा, चिन्तन, समाधि, पूर्णता र मन्त्र हो, किनकि यसले तिम्रो अनुहारमा प्रसन्नता दिन सक्छ, तिमीलाई पूर्णता दिन सक्छ, जीवनको चिन्तन दिन सक्छ, जीवनको परितृप्तता दिन सक्छ । म तिम्रो अगाडि एउटा नवीन व्याख्या प्रस्तुत गरिरहेको छु र तिमीलाई यो कुरामा स्पष्ट पनि गरिदिन चाहन्छु– यो बाटो त्यति सरल भने छैन । संसारको सबैभन्दा कठिन बाटो प्रेमको बाटो हो किनकि–

**प्रेम को पंथ कठोर कराल,**
**तलवार की धार पे धावनो है ।**

प्रेम-पंथ त अत्यन्त कठिन छ जसरी तरवारको धारमा हिँड्नाले पाउ रक्ताम्य हुन्छ... तर यो घाउ नै जीवनको आनन्द हो किनकि जीवनको आनन्द प्रेमको सुवासबाट पाइन्छ... परिवारबाट पाइँदैन, देहसुखबाट पाइँदैन, वासनाबाट पाइँदैन,सम्भोगबाट पाइँदैन... जसलाई तिमीले सुख सम्झिरहेका छौ, त्यो केही पनि होइन, एउटा छल हो, छलको कल्पना मात्र हो ।

यदि तिमी जीवनको परितृप्तता हेर्न चाहन्छौ, जीवनको आनन्द हेर्न चाहन्छौ, जीवनमा केही बुझ्ने क्रिया गर्न चाहन्छौ र सही शब्दमा भन्दा 'गुरुलाई आत्मसात् गर्न चाहन्छौ' भने तिमीले पहिलो पाठ पढ्नु पर्नेछ– 'प्रेम'को । तिमीले आफैलाई समर्पित गर्ने पहिलो पाठ पढ्नु पर्नेछ । तिमीले आफ्नो पाउलाई रक्ताम्य पार्ने पहिलो पाठ पढ्नु पर्नेछ... र मैले तिमीलाई जानीजानी तरवारको धारमा हिँड्न बाध्य पारिरहेको छु, जानीजानी तिमीलाई त्यो बाटोमा गतिशील गराइरहेको छु जुन आफैमा बडो खतरापूर्ण छ । त्यस बाटोमा हिँड्दा सैयौँ प्रकारका कुरा उठ्न सक्छन् ।

कृष्णका पनि सैयौँ प्रकारका कुरा उठे, उनीमाथि पनि सैयौँ प्रकारका आक्षेप लागे । जे भन्नु हुँदैनथ्यो ती सबै पनि भने– पहिलेका सन्त, भक्त र योगीहरूले पनि... अनि त्यसबेलाका गोपगोपीहरूले पनि... गाउँका मुखियाले पनि ।

तर कृष्णले बुझेका थिए कि आजसम्म जुन परिकल्पना बन्दै आइरहेको छ त्यो त काम नलाग्ने ठुटोको कल्पना हो, त्यो तलाउको जलजस्तै स्थिर गन्हाएको पानी हो... जहाँ पलेटी मारेर बसिन्छ, जहाँ आँखा बन्द गरेर अगाडि बढ्ने क्रिया हुन्छ, जहाँ अनुहारमा प्रसन्नता हुँदैन, जहाँ कुनै तृप्ति छैन । कृष्णले बिलकुलै भिन्न बाटो रोजे र त्यो बाटो सही थियो । त्यो बाटो यजुर्वेदको थियो, त्यो बाटो सामवेदको थियो, त्यो बाटो अथर्ववेद, ऋग्वेदको थियो ।

मैले यदि चारै वेदको कल्पना दिनुपर्‍यो भने, यदि मैले तिमीलाई चारै वेदको अर्थ स्पष्ट पार्नुपर्‍यो भने म भन्दछु कि चारै वेदको सारभूत तथ्य एउटै छ– 'जीवनको प्रारम्भ प्रेम हो, जीवनको अन्त प्रेम हो', तर हामीले प्रेमको परिभाषालाई बुझेकै छैनौ । प्रेम गर्न त पत्नीले, स्त्रीले, नारी शरीरले सक्दछन् किनकि उनीहरूले आगोमा हामफाल्ने क्रिया जान्दछन्, उनीहरूले आफैलाई समर्पित गर्ने क्रिया जान्दछन् । कसैले आफूलाई केही भन्ला, कसैले रोक्ला भन्ने कुराको चिन्ता उनीहरू गर्दैनन् । त्यसैले जब उनीहरूले यस बाटोमा पाउ राख्दछन्, समाजले उनीहरूको कुनै अहित गर्न सक्दैन । समाजले त उनीहरूलाई तथानाम भन्ला, तर आफूले के गरिरहेको छु भन्ने कुराको भान नै उनीहरूलाई हुँदैन । क्रमशः जय गुरुदेव !

आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं । कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ । यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ ।

# अप्सरासँगको यात्रा

...शरीर अलि लट्ठ भइरहे जस्तो हुने हुँदोरहेछ । कहिलेकाहीँ दिउँसै पनि निद्रा लाग्ने हुँदोरहेछ । कुनै बेला केही समय हराए जस्तो, टोलाएर बसे जस्तो हुने रहेछ । स्थूल शरीरले कति तपस्या गरेको छ, सोहीअनुसार असर पर्ने रहेछ । तपस्यायुक्त भइरहेको बेलामा खासै सूक्ष्म क्रमको यात्राले त्यति असर पर्दो रहेनछ । तपस्या घटेको बेलामा भने अलि-अलि सन्तुलन बिग्रँदो रहेछ । कुनै बेलामा आफूले बोलेको पनि अरू नै बोले जस्तो लाग्ने रहेछ । अरूले बोलेको पनि आफै बोले जस्तो लाग्दो रहेछ । यी त भए मेरो शरीर (स्थूल देह) का अनुभव-अनुभूति । सूक्ष्म देहले प्राप्त गर्ने अनुभव-अनुभूतिको संसार फेरि अर्कै प्रकारको छ ।

जब म सूक्ष्म देहमा पूर्णरूपले फिर्ता भएँ, वास्तविक गन्तव्य स्थल (ठाउँ) आइसकेको रहेछ । तिनी (अप्सरा) मेरो प्रतीक्षामा रहिछन् । 'यान' (सूक्ष्मरूपको उपकरण) रोकिएको थियो । मलाई यहाँ एउटा खोतल्नै मन लागेको विषय के हो भने जब म स्थूल देहमा थिएँ, त्यतिबेलादेखि यात्रामा निस्केको सूक्ष्म शरीरले पत्तै नपाई विभिन्न अवस्था पार गरिरहेको छ । सूक्ष्म शरीरले ध्यान गर्दा त्यसबाट निस्केको देह कुन हो ? त्यो देहलाई के भन्दछन् ? फेरि त्यो देहले कसरी स्थूल देहसँग सम्पर्क कायम गर्‍यो ? त्यो स्थूल साँच्चै मेरो पृथ्वीतटको हो कि अर्कै ठाउँको होला ? एउटा सूक्ष्म शरीर कसरी अनेक बन्न लाग्यो ? म कसरी अनेक रूपमा बाँडिन पुगेँ ? म कुनचाहिँ सत्य हुँ ? बाँकी सबै के हुन् ? यसप्रकार नाना भाँतीका रूपले मलाई ज्यादै नै विचलित बनाए । मेरो यस प्रकारको अवस्था तिनले (अप्सराले) राम्ररी नियालिरहेकी रहिछन् । यति धेरै सूक्ष्म तरङ्ग आए कि जसको चित्रण यहाँ गर्न मलाई गाह्रो परिरहेको छ । यी तरङ्ग बिनाकारण त्यसै आउने भए पहिला पनि आउँथे होलान् । यही घटनापश्चात् आउनुमा पक्का पनि केही रहस्य होलान् । त्यसमा पनि यी विचार केवल सिद्धान्तका रूपमा मात्र आएका छैनन् । मसँग प्रयोगात्मकरूपमा नै सूक्ष्म घटना घटित भएका छन् । म झसङ्ग भएँ । म सूक्ष्मरूपका प्रसङ्ग

नै कोट्याइरहेको छु । मैले तिनीसँग सोधेर यी सम्पूर्ण प्रकारका प्रश्नको उत्तर प्राप्त गर्ने निधो गरेँ ।

मलाई अहिलेसम्म तिनले (अप्सराले) धेरै कुराको ज्ञान गराएकी छिन् । अत्यन्त नजिकको सहकर्मीजस्तो भएर मलाई सघाइरहेकी छिन् । सुझाव र सल्लाह दिइरहेकी छिन् । कुनै बेला मलाई माथिल्लो दर्जा दिएर सम्मान गरेकी छिन् । कुनै बेला आफूभन्दा तलकोलाई सम्झाएर ज्ञान प्रदान गरे जस्तो गर्दछिन् । तर पनि तिनमा लुकेर रहेको एउटा गुणचाहिँ के हो भने 'तिनले कहिल्यै पनि आफूलाई ठूलो मानेकी छैनन् । केवल निमित्त भएर कार्य गरिरहे जस्तो भान हुन्छ ।' यदि यसप्रकारको गुण व्यवहारमा लागू गर्न सकियो भने साँच्चै नै कुनै साधक वा साधिकाले उच्च स्थान प्राप्त गर्नेछन् ।

जब म तिनी समक्ष गएँ, तिनले पहिल्यै मैले के सोध्छु भन्ने थाहा पाइसकेकी रहिछन् । तिनले मुस्कुराउँदै मलाई भनिन्– "हजूरका प्रश्नहरूको सम्पूर्ण उत्तर केवल हजूरको गुरुलाई मात्र थाहा हुन्छ । समय आएपछि स्वत: नै आत्मसत्ताको माध्यमबाट गुरुदेवले सम्झाउनु हुनेछ । छटपटी हुनु स्वयंमा अधैर्य बन्नु हो । यसको प्रभावबाट शक्तिको रूपमा ह्रास आउन पनि सक्छ र रङ्ग बदलिन सक्छ । अब यी सम्पूर्ण कुरा छाडेर हामी आफ्नो यात्रा क्रममा नै लाग्दा राम्रो हुनेछ ।"

तिनले कति सजिलोसँग मेरो प्रश्नको उत्तर नदिएता पनि मेरो छटपटिएको आत्मालाई नियन्त्रणमा लिइन् । मलाई स्वत: नै 'मस्तिन' बुझ्यो । यहाँ मैले आत्मा जगत्को अनुभवको प्रसङ्ग ल्याएको हुनाले 'मस्तिन' शब्द प्रयोग हुन गयो, क्षमा चाहन्छु । स्थूल देहमा जसरी 'चित्त' भन्ने ग्रन्थि हुन्छ तर देख्न सकिँदैन, त्यसैगरी सूक्ष्म देहमा

**"तँ अब तान्त्रिक इलाकाभित्र प्रवेश गरिसकेको छस्, होश पुऱ्याएर अगाडि बढ्नू । पल-पलमा खतरा छ । केही पर पुगेपछि माता कालीको शक्तिपीठ छ । उहाँको आशीर्वाद लिन नभुल्नू । आत्मरक्षाको लागि यो मन्त्र जप गर्नू (स्मरण गर्नू) । यो मन्त्र यही इलाकामा लागू हुनेछ । त्यसैले यो मन्त्र यहीँको भाषामा निर्मित छ ।"**

पनि सूक्ष्म आँखाले ठम्याउन नसक्ने ग्रन्थि अवस्थित भएको हुने रहेछ । त्यही ग्रन्थिको नाम 'मस्तिन' हो । आत्मा प्रफुल्लित अवस्थामा हुँदा 'मस्तिन' उच्चारण हुँदा अझ राम्रो हुने रहेछ ।

त्यसपछि म चुपचाप तिनको भनाइअनुसार नै चल्न थालेँ । हामी सँगसँगै पैदल मार्गको माध्यमबाट हिँड्न थाल्यौँ । सूक्ष्म यान तिनले फर्काइदिइन् । हिँड्दै जाँदा पृथ्वीतटको जस्तै भू-भाग देखिन थाल्यो । हरिया जङ्गल थिए । कीरा, चराचुरुङ्गीको आवाज सजिलै सुनिन थाल्यो । अचम्मको कुराचाहिँ के भने चराचुरुङ्गी, जनावर आदि जसले जसरी कराए पनि मैले सबै प्रकारका भाषा बुझेको जस्तो लागिरह्यो । स्थूलरूपको जङ्गल विहार (दृश्यावलोकन गर्दै आनन्द लिँदै भ्रमण गर्ने प्रक्रिया) भन्दा सूक्ष्मरूपको जङ्गल विहारले मलाई ज्यादै नै आनन्द प्रदान गरिरहेको थियो । साना-साना कुराको पनि अर्थ कोट्याउन मन लाग्ने अनि त्यसभित्र प्रवेश गर्न मन लाग्ने आदि प्रक्रियाले मलाई झन् आनन्द दिइरहेको थियो । यत्तिकैमा हामी हिँडिरहेका थियौँ, एउटा डरलाग्दो हिंस्रक प्राणी बाघ देखापऱ्यो । त्यो जीव (बाघ) हाम्रो बाटोतर्फ नै आइरहेको थियो । मलाई डर लाग्यो । उक्त बाघ नजिकै आइपुग्यो । तिनी (अप्सरा) टक्क अडिइन् । म पनि अडिन बाध्य भएँ तर पनि भाग्न मन लागिरहेको थियो ।

"आज बाघले हामी दुवै जनालाई मार्ने भयो, अगाडि नै रूख चढ्नुपर्ने रहेछ" आदि कुरा याद गर्दा नगर्दै बाघसँग तिनी (अप्सरा) को जम्काभेट भयो । तर अचम्मको कुरा के भयो भने उक्त बाघ आफ्नै रफ्तारमा हिँडिरह्यो । बाघको शरीरबाट तिनी तुरुन्त पार भइन् । अब मेरो पालो आयो । मेरो पूरै शरीर सजिलैसँग बाघको शरीरमा छिऱ्यो । म सूक्ष्म शरीरमा हुँदा पनि स्थूल देहकै जस्तो गुण लुकेर रहेको कारण डर लागेको रहेछ । हामी आनन्दपूर्वक हिँडिरह्यौँ, हिँडिरह्यौँ । जङ्गल ज्यादै घना थियो । एक किसिमले भन्ने हो भने कहालीलाग्दो खालको थियो । बाक्लो जङ्गल अनि सुनसान वातावरणले गर्दा अलि डर-डर लागिरहेको जस्तो र प्राकृतिक सुन्दरताले गर्दा त्यो ठाउँ कहिल्यै छोड्न नपरे पनि हुन्थ्यो भन्ने भावनाले गर्दा डर मिश्रित आनन्द वा आनन्द मिश्रित डरले मभित्र कब्जा

जमाइरहेको थियो । मेरो हालत तिनलाई पूरा-पूरारूपले थाहा भए पनि थाहा नपाएको जस्तो गरिरहेकी थिइन् । तर अचम्मको कुराचाहिँ के हो भने त्यो बाटो नौलो ठाउँको भएता पनि तिनी सरासर हिँडिरहेकी थिइन् । जुनसुकै स्थान पनि उनको लागि परिचित थियो ।

जाँदाजाँदा एउटा यस्तो इलाका आइपुग्यो कि त्यहाँबाट अगाडि जानको लागि सूक्ष्म यात्रामा केही अवरोध सृजना भयो । तिनी टक्क अडिइन् । मेरो अगाडि-अगाडि हिँडिरहेकी तिनी (अप्सरा) यसरी रोकिएको देख्दा म पनि अचम्ममा परेँ । तिनको मुहार अध्ययन गर्दा यस्तो लाग्दथ्यो कि तिनी डराइरहेकी छिन् । बल्ल तिनी (अप्सरा) को मुहारमा "म आइमाई हुँ, मभन्दा पुरुष जाति नै सङ्घर्षको लागि उपयुक्त हुनेछ, म त केवल शक्तिस्वरूपिणी हुँ" भन्नेजस्ता लक्षण व्याप्त भएको स्पष्ट देखिन्थे । बल्ल तिनले पुलुक्क मतर्फ हेरिन् र केही कुरा दर्शाउने क्रम शुरु गरिन् । "अब यहाँ तान्त्रिक इलाकामा हामी जाँदैछौं । हामी सूक्ष्म सत्तामा भएको हुनाले मन्त्रको अधीनमा चल्नुपर्ने हुन्छ । कसैले मन्त्र शक्तिको बलमा हामीलाई नियन्त्रणमा लियो भने उसले भने मुताबिक चल्नुपर्ने हुन्छ । विशेष गरेर स्थूल देह नै नहुनेको लागि त यसभन्दा ठूलो सङ्कट अरू हुन नै सक्दैन । त्यसकारण यतिबेला म हजूरको सूक्ष्म शरीरमा लुकेर बस्नेछु र म मेरो देहलाई सुरक्षित राख्नेछु । समय आएपछि म बाहिर आउनेछु ।" यति भन्न मात्र के पाएकी थिइन् तिनी हतारहतार मेरो शरीरमा प्रवेश गरिहालिन् ।

तुरुन्त नै त्यहाँ चारजना व्यक्ति देखा परे । तिनीहरू हेर्दैमा डरलाग्दा, अग्ला-अग्ला खालका, काला-काला वर्णका, जुँगा पाली माथि फर्काएका भीमकाय स्वरूपका, हातमा तरवार लिएका थिए । मलाई मार्ने नियतबाट नै घेरा हाले र अट्टहास गर्न थाले । म एक्लै थिएँ, के गर्ने के नगर्ने, कसलाई सोधौं ? म डर मिश्रित विस्मयमा परेँ । अन्तिम अवस्थामा आफ्ना आराध्य गुरुहरूलाई सम्झेँ । जब मैले गुरुहरूलाई सम्झेको मात्र थिएँ, ती डरलाग्दा मान्छेहरू हराए वा कता गए, थाहै भएन । मलाई पूर्णरूपले गुरु सान्निध्यता प्राप्त भयो र निर्देशन पनि प्राप्त भयो । "तँ अब तान्त्रिक इलाकाभित्र प्रवेश गरिसकेको छस्, होश पुऱ्याएर अगाडि बढ्नू । पल-पलमा खतरा छ । केही पर पुगेपछि माता कालीको शक्तिपीठ छ । उहाँको आशीर्वाद लिन नभुल्नू । आत्मरक्षाको लागि यो मन्त्र जप गर्नू (स्मरण गर्नू) । यो मन्त्र यही इलाकामा लागू हुनेछ । त्यसैले यो मन्त्र यहींको भाषामा निर्मित छ" भनेर तीनपटकसम्म गुरुदेवले मलाई अवगत गराएर त्यहाँबाट अलप हुनुभयो । त्यो मन्त्र लगभग आधा पेज जतिको थियो । मलाई त्यो मन्त्र स्वत: नै कण्ठस्थ भयो ।

जब गुरुदेव अलप हुनुभयो ती डरलाग्दा मान्छेहरू फेरि प्रकट भए । त्यसपछि मलाई अवगत भयो कि तिनीहरू गणहरू रहेछन् भनेर । तिनीहरूले मान्छेका भेषमा रहेर त्यस इलाकाको सुरक्षा गर्ने रहेछन् । पुन: तिनीहरू मतर्फ नै हिंस्रकरूपमा अगाडि आए र म अगाडि बढ्न खोज्दा छेके (रोके) । मैले गुरुको आदेशलाई शिरोधार्य गरी मन्त्र वाचन गर्न थालेँ । उक्त मन्त्र सुन्नासाथ ती गणहरू हर्षले गद्गद् भए । मलाई नमस्कार गर्दै क्षमा माग्न थाले । मैले केही कुरा बुझ्न नै सकिन किनकि त्यस मन्त्रमा के-के शक्ति समाहित छन् । भाषाको नौलोपनले गर्दा मैले बुझ्न नै सकिन । नबुझे पनि कामचाहिँ भइरहेको थियो । जब-जब मैले त्यस मन्त्र कराएर भन्न थालेँ, त्यहाँ अनगिन्तीरूपमा गणहरू प्रकट हुन थाले । उक्त मन्त्रको प्रभाव के रहेछ भने मैले कराएर जति टाढासम्म आवाज पुऱ्याउन सक्यो त्यत्ति नै इलाकाभित्र भएका गणहरू (सूक्ष्मरूपका गणहरू) प्रकट भएर जागृत भएर आउने रहेछन् । हेर्दाहेर्दै त्यहाँ धेरै भीड जम्मा भयो । त्यही लावालस्करको बीचमा म थिएँ । तिनीहरू (गणहरू) आफ्नै मस्तीमा थिए । गणहरूमा केटा र केटी दुवै प्रकारका थिए । यत्तिकैमा म के गरौं, के नगरौं भन्ने द्विविधामा अल्झिरहेको थिएँ ।

यस्तै अवस्थामा मभित्रबाट कसैको शब्द आयो । अगाडि नै ममा समाहित अप्सराको स्वर थियो त्यो । "अब हजूर यहाँबाट गइहाल्नुहोस्, अन्यथा यिनीहरूको दुष्प्रभाव हाम्रो देह (सूक्ष्म देह) मा सरेर आई हाम्रो शक्तिमा ह्रास आउनेछ र सूक्ष्म यात्रामा केही बाधा आउनेछ ।" यति भनिसकेपछि तिनी (अप्सरा) रोकिइन् । म तुरुन्त त्यहाँबाट अगाडि बढेँ । म हतार-हतार लम्कन थालेँ (मानौँ मलाई कसैले देख्ला र भुलाउला अनि मेरो निश्चित कार्य पूरा नहोला जस्तो गरी) । म यति छिटो हिँडेको रहेछु कि थाहै नपाइकन माता कालीको शक्तिपीठमा पुगिसकेको रहेछु । माताको अगाडि पुग्नासाथ साष्टाङ्ग दण्डवत् गर्नको लागि लम्पसार पर्न मात्र के लागेको थिएँ, कोमल स्वरमा "पर्खनोस्, केही रीत पुऱ्याएर माताको पूजा गरी दर्शन गरी हाम्रा गल्ती उपर मातासँग क्षमा मागेपछि मात्र दर्शन गरौँला" भनी तिनी (अप्सरा) मबाट अलग भइन् । अब हामी दुईजनामा रूपान्तरण भयौँ । म नजानिँदो रूपबाट केही बन्धनमा परिरहेको छु, मैले केही गल्ती गरिरहेको छु जस्तो भान हुन थाल्यो । तैपनि म...

# आफ्नो हात आफै हेरौँ

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा शुक्र पर्वतको बारेमा चर्चा गरिएको छ । यो लेख पढेर तपाईं पनि आफ्नो हातमा रहेको शुक्र पर्वतको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ । यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## शुक्र पर्वत

बूढी औँलाको दोस्रो पोरु (भाग) भन्दा तल आयु रेखाले घेरिएको स्थानलाई हस्तरेखा विशेषज्ञहरू शुक्र पर्वतको नामले सम्बोधन गर्दछन् । ग्रीसमा शुक्रलाई 'सुन्दरताकी देवी' मानिन्छ । जसको हातमा शुक्र पर्वत विकसित हुन्छ, त्यो व्यक्ति सुन्दर तथा पूर्ण सभ्य हुन्छ । ऊ स्वस्थ हुन्छ, साथै सामुन्ने रहेको अर्को व्यक्तिमा उसको व्यक्तित्वको प्रभाव विशेषरूपले पर्दछ । यस्तो व्यक्तिमा साहस र हिम्मतको कमी हुँदैन । यदि कुनै व्यक्तिको हातमा यो पर्वत त्यत्ति विकसित छैन भने त्यो व्यक्ति कायर तथा दबिने स्वभावको हुन्छ ।

जसको हातमा शुक्र पर्वत सामान्यभन्दा बढी विकसित हुन्छ, त्यो व्यक्ति भोगी तथा विपरीत लिङ्गप्रति लालायित रहने हुन्छ । यदि कसैको हातमा शुक्र पर्वतको अभाव देखिन्छ भने त्यो व्यक्ति वीतरागी, साधु तथा संन्यासीजस्तै हुन्छ, गृहस्थ जीवनमा उसको रुचि शून्यजस्तै हुन्छ । यदि शुक्रको विकास पूर्णरूपमा भएको छ तर उसको मस्तिष्क रेखा सन्तुलित छैन भने प्रेम तथा भोगको क्षेत्रमा त्यो व्यक्ति बदनाम हुन्छ । यस्तो मानिसको प्रेमलाई वासनाप्रधान मान्न सकिन्छ ।

शुक्र पर्वतको उभारले व्यक्तिलाई तेजस्वी र लावण्यमान् बनाउँछ । यस्तो व्यक्तिको अनुहारमा यस्तो आकर्षण हुन्छ जसको कारण मानिसहरू बारम्बार उसतिर आकृष्ट हुन्छन् । कठिनाइलाई पनि यस्तो व्यक्तिले हाँसेर सहन्छ तथा आफ्नो कार्य एवं कर्तव्यप्रति पूर्णत: जागरुक रहन्छ । सुन्दर एवं कलात्मक वस्तुहरूप्रति यस्तो व्यक्तिको रुचि स्वाभाविक हुन्छ ।

यदि हात खस्रो छ तथा त्यसमा शुक्र पर्वत धेरै विकसितरूपमा छ भने त्यो मानिस भोगी तथा ऐश गर्ने हुन्छ । यस्तो व्यक्ति भौतिक सुखको दास हुन्छ । तर हात चिल्लो एवं मुलायम हुनाको साथै शुक्र पर्वत पूर्णत: विकसित छ भने यस्तो व्यक्ति सफल प्रेमी तथा उत्कृष्टकोटिको कवि हुन्छ ।

शुक्र पर्वतको अनुपस्थितिले व्यक्तिको जीवनमा दु:ख तथा पीर ल्याउँदछ । यदि शुक्र पर्वत सामान्यरूपमा विकसित छ भने त्यो व्यक्ति सुन्दर, शुद्ध प्रेमभाव राख्ने तथा संवेदनशील हुन्छ । यदि शुक्र पर्वत मङ्गलतर्फ झुकेको छ भने ऊ प्रेमको क्षेत्रमा कोमल हुँदैन । उसको जीवनमा बलात्कारका घटना धेरै हुन्छन् ।

शुक्रप्रधान व्यक्तिहरूलाई घाँटीको रोग विशेषरूपमा रहन्छ । यस्तो व्यक्ति ईश्वरमा आस्था राख्ने हुँदैन । उसको जीवनमा साथीहरू धेरै हुन्छन् तथा जीवनमा प्रेम र सौन्दर्यलाई नै उसले सबथोक सम्झन्छ ।

यदि औँलाको टुप्पो कोणदार छ र शुक्र पर्वत विकसित छ भने त्यो

व्यक्ति कलात्मक रुचि भएको हुन्छ । यदि औँलाको टुप्पो वर्गाकार छ भने व्यक्ति समझदार हुन्छ र उसले तर्कसंगत ढंगबाट काम गर्दछ । त्यसैगरी फैलिएको टुप्पोले व्यक्तिमा दयालुपनाको भावना विकसित गर्दछ ।

वस्तुत: शुक्रप्रधान व्यक्तिले नै यस सुन्दर विश्वलाई राम्रोसँग बुझ्न सक्दछ र यसको आनन्द पनि लिन सक्दछ । जय गुरुदेव !

## कविता

# गुरू र ज्ञान

गुरु हाम्रा महान् पिता, ज्ञान हाम्रो सारथी ।
सिक्नुपर्छ जान्नुपर्छ, बलेसम्म आरती ।।
समाजका नीतिनियम सबै कुरा ज्ञान नै हुन् ।
सबै कुरा हामीलाई गुरुले नै दिने हुन् ।।
ध्यानमा छन् गुरु मूर्ति, पूजामा छन् गुरु पढ ।
ब्रह्मा विष्णु महेश्वर, उनकै छ रुप सब ।।
ज्ञान हाम्रो आवश्यकता, गुरु हाम्रा शिक्षक कर्ता ।
सिकाउने र सिक्ने बीचमा हुनुहुन्न भिन्नता ।।
गुरुलाई सम्मान गरी, ज्ञान हाम्ले सिक्दै जाउँ ।
इतिहासको एक पानामा, उदाहरणीय बन्दै जाउँ ।।
गुरुदेवको काख, ज्ञान हाम्लाई लाख ।
अनाथ छौँ हामी, पाउँ त्यो साथ ।।
इतिहासको एक पानामा ज्ञान र गुरुको सम्बन्ध लेखौँ ।
ज्ञान र गुरु नङ र मासु, यो कुरा हामी सबले बुझौँ।।
गुरु वाक्य मूल मन्त्र, ज्ञान कृपा मोक्ष ।
भन्न पाउँ सधैँ हाम्ले गुरु महादेव ।।
गृहस्थमा बसेर नै योगी बन्न सिकाइदियौ ।
मन्त्र तन्त्र रहस्य यो पृथ्वीमा झिकाइदियौ ।।
संसार नै स्वर्ग बन्ने बाटाहरु खोलिदियौ ।
विद्यालय ज्ञान केन्द्र बनी तिमी आइदियौ ।।
तिम्रो ज्ञान जसले पाउँछ दानवबाट देवता बन्छ ।
केवल तिम्रो कृपाबाट संसार सारा बदलिन्छ ।।
गुरु दीप हुन् सल्काउने ज्ञानले ।
विद्या र बुद्धि बढ्दछ सधैँ योग र ध्यानले ।।
जय गुरुदेव !

**– सन्ध्या रेग्मी**
**कक्षा ९**
**जन जुक्त शाही मा.वि., तनहुँ**

*(सि.श.के. सम्पर्क कार्यालय तनहुँद्वारा दमौलीमा आयोजित कविता वाचन प्रतियोगितमा प्रथम स्थान प्राप्त गरेको कविता)*

## फाल्गुण महिनामा पर्ने चाडपर्व

| फाल्गुण १ गते | **तान्त्रोक्त बगलामुखी हवन**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन-दमौली** |
|---|---|
| फाल्गुण ५ गते | **श्री शिव गोरक्ष हवन** |
| फाल्गुण ६ गते | **तान्त्रोक्त वटुक भैरव हवन**<br>गोरखकाली पूजा |
| फाल्गुण ७ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन-पोखरा** |
| फाल्गुण ९ गते | विजया एकादशी व्रत |
| फाल्गुण १० गते | **दिव्य गुरु महोत्सव** |
| फाल्गुण ११ गते | प्रदोष व्रत |
| फाल्गुण १२ गते | महाशिवरात्रि व्रत |
| फाल्गुण २१ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| फाल्गुण २४ गते | आमलकी एकादशी व्रत |
| फाल्गुण २५ गते | प्रदोष व्रत |
| फाल्गुण २७ गते | होली |
| फाल्गुण २८ गते | फागु पूर्णिमा, तराईमा होली |

**प्रत्येक बृहस्पतिबार बिहान १०:00 बजे-गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:00 बजे-आरती**

# गुरुवाणी

**जो युग पुरुष छन्, जो चेतनाप्रज्ञ छन्, जो जीवन्त छन्, उनीहरुले विष पिएर अमृत बाँड्नुपर्छ, यही उनीहरुको नियती बन्छ । आजसम्म युगले, देशले, समाजले र संसारले यही गरेको छ । ईसा मसीहलाई सुलीमा टाँगियो, सुकरातलाई विष पिउनका लागि बाध्य पारियो, मीरा भएको ठाउँमा सर्पको बाकस पठाइयो र शंकराचार्यलाई दूधमा सीसा मिलाएर पिउनका लागि बाध्य पारियो । जो जागृत गुरु छन्, उनीहरुसँग यो समाजले यस्तै गऱ्यो र आज पनि यही भइरहेको छ । यो त मलाई नै थाहा छ कि पाइला पाइलामा कसरी आलोचनाका काँढाहरु बिछ्याइँदै छन्, पाइला पाइलामा विश्वासघातको कुचक्र कसरी रचिँदै छ र कसरी पाइला पाइलामा बाधाहरुको पहाड उभ्याइँदै छ तर म आफ्नो पथमा गतिशील रहनेछु । मैले गुरु बनेको सजाय भोगिरहेको छु तर म यसमा प्रसन्नचित्त छु । निश्चय नै मलाई हरेक क्षण विष पिउनका लागि बाध्य हुनु परिरहेको छ, तर मैले विष पिउनु परे पनि तिमीहरुलाई अमृत बाँडिरहन्छु, जीवनको अन्तिम क्षणसम्म ।**

# परमपूज्य सदगुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौं । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

वास्तवमा नै साधना कक्ष आफैमा अद्वितीय कक्ष हो जुन तेजस्विताबाट सञ्चालित छ । यदि कुनै सामान्य व्यक्ति यहाँ पस्यो भने उसले अकस्मात् चार सय चालीस भोल्टको झट्का अनुभव गर्ला । जो उच्चकोटिको साधनाले सम्पन्न छ, सायद ऊ नै यस साधना कक्षमा बस्न सक्दछ । त्यहाँ पूज्य गरुदेवले करिब तीन घण्टा बिताउनुभयो र यस अवधिमा उहाँ सूक्ष्म शरीरबाट सिद्धाश्रम जानुभएर त्यहाँका ऋषिहरूसँग सम्पर्क स्थापित गर्नुभयो। आजको दिनमा उहाँले मलाई पनि सूक्ष्म शरीरका साथ आफूसँगै हिँड्न भन्नुभयो । यो मेरो सौभाग्य थियो ।

यो तीन घण्टाको अवधिमा उहाँले करोडौं संन्यासी, शिष्यहरूलाई सम्झाउनुभयो, उनीहरूलाई मार्गनिर्देशन गर्नुभयो, यसपछि गर्नुपर्ने साधना सिकाउनुभयो र उनीहरूको समस्याको समाधान गर्नुभयो । करिब ५ बजे उहाँ पुनः शरीरस्थ हुनुभयो । मैले आँखा खोलेर हेर्दा त त्यसै साधना कक्षमा आफूलाई गुरुदेवसँगै पाएँ ।

साधना कक्षबाट बाहिर आएर सायंकालमा आउने शिष्यहरूलाई उहाँले भेट्न थाल्नुभयो र उनीहरूलाई मार्गदर्शन गर्न लाग्नुभयो । उहाँलाई भेट्न आएका मानिसहरूको भीड बिहानभन्दा साँझ झन् धेरै थियो तर उहाँको अनुहारमा कुनै प्रकारको तनाव थिएन। यस क्रममा करिब सात बज्दा उहाँ त्यहाँबाट उठेर आफ्नो पूजा गृहमा जानुभयो र परिवारका सदस्यहरूसँग सायंकालीन आरतीको कार्य सम्पन्न गर्नुभयो ।

यसैबीच कैयौँ घनिष्ट व्यक्तिहरू टाढा-टाढाबाट उहाँसँग भेट्नका लागि आउनुभएको थियो जो उहाँको घरमा नै बस्नुभएको थियो । उहाँहरू सबैसँग भेट्दाभेट्दै करिब साढे नौ बजिसकेको थियो । त्यसपछि उहाँले मलाई घरको तल रहेको स्वाध्याय कक्षमा लिएर जानुभयो र ब्रह्मसूत्रसँग सम्बन्धित पुस्तक लेख्न थाल्नुभयो । ब्रह्मसूत्र आफैमा अद्वितीय ग्रन्थ हो र सही अर्थमा यो निखिल भाष्य नै हो ।

रातिको एक बजे उहाँ आफ्नो कक्षमा जानुभयो र त्यहाँ उच्चकोटिको साधनामा रत हुनुभयो । केही समयसम्म त म त्यस कक्षमा बसिरहेँ तर उहाँको गति र उहाँको सूक्ष्म शरीरलाई मैले देख्न सकिरहेको थिइन । उहाँ सशरीर कहीं जानुभएको थियो कि ? योगीको गति योगी नै जानून्...

तबसम्म चार बजिसकेको थियो, उहाँले चाँडै स्नान गर्नुभयो र मसँग छतमा आएर मृगचर्ममा बसेर प्रातःकालीन सन्ध्या-वन्दना प्रारम्भ गर्नुभयो ।

यो पूरै अवधि (दिनचर्या) मा उहाँ कहिले निदाउनुहुन्थ्यो, कहिले विश्राम गर्नुहुन्थ्यो, केही थाहा हुँदैनथ्यो, तर उहाँ यी सबै कार्यलाई बराबर निष्पृह भावबाट गर्दै रहनुहुन्थ्यो। यसका

अतिरिक्त पुस्तक लेखन, पत्रिकाको कार्य, सांसारिक कार्य, यात्रा, शिविर संचालन, साधकहरूको मार्गदर्शन आदि सयौँ, हजारौँ कार्य छन् जसलाई उहाँले हजारौँरूपमा गरिहरनुहुन्थ्यो । यस्तो व्यक्तित्वलाई न त मैले पहिले संन्यासी जीवनमा बुझ्न सकेको थिएँ, न त अहिले गृहस्थ जीवनमा नै बुझ्न सकेको छु। वास्तवमा नै उहाँको एक-एक क्षण आफैमा समर्पित छ ।

**युगपुरुष डा. नारायण दत्त श्रीमालीज्यू :**

परमपूज्य गुरुदेव जहिलेसुकै जहाँतहीं आफूलाई अगाडि ल्याउन चाहनुहुन्न। वेताल भट्टले उहाँको बारेमा भन्नुभएको छ– उहाँ आफूलाई लुकाएर कार्य गर्न चाहनुहुन्थ्यो । यदि उहाँको ज्ञानको सय भागको एक भाग मात्र पनि कसैसँग भएमा उसले आफूलाई सर्वश्रेष्ठ सिद्ध मान्दथ्यो होला र प्रदर्शन एवं प्रचारमा नै लीन रहन्थ्यो होला । तर गुरुदेवले त हामी सबैको समस्यालाई समाधान गरेर हामीलाई जीवन प्रदान गरिरहनुभएको छ। उहाँलाई प्रचारबाट जति टाढा हुनुभएको हामीले देखेका छौँ, त्यति नै तपाईंहरूले पनि अनुभव गर्नुभएको हुनुपर्छ ।

भारतवर्षमा एउटा यस्तो समय पनि थियो जब गुरु गोरखनाथ, मत्स्येन्द्रनाथले तन्त्रको सहज, सरल पद्धतिलाई स्पष्ट गर्नुभयो, शंकराचार्यले साधनाहरूको समन्वय गर्ने चेष्टा गर्नुभयो, धन्वन्तरिजस्ता ऋषिले आयुर्वेदको विशिष्ट स्थितिको प्रस्फुटन गर्नुभयो, नागार्जुनप्रभृति विद्वान्‌हरूले रसायन शास्त्रलाई पूर्णता दिने साहस गर्नुभयो, दिव्यानन्द तथा अवधूतानन्दले सावर साधनालाई शिखरमा पुऱ्याउने प्रयास गर्नुभयो । तर आज त सबै क्षेत्रमा एउटै मात्र व्यक्तित्व हुनुहुन्छ, ती सबैको सम्मिलित स्वरूप नै हाम्रा पूज्य गुरुदेव हुनुहुन्छ जो कुनै एक क्षेत्रमा मात्र होइन सम्पूर्ण क्षेत्रमा पूर्ण हुनुहुन्छ, निष्णात् हुनुहुन्छ। हिन्दु, मुस्लिम, इसाई तथा अन्य जति पनि मान्यताहरू छन् गुरुदेवले सबैलाई उनीहरूको श्रेष्ठ रूपमा आज प्रकट गर्नभएको छ । सन् १९८७ मा जब इस्लामी प्रयोगमा गुरुदेवले शिविर सम्पन्न गर्नुभयो तब गुरुदेवलेजसरी कुनै मुस्लिमले पनि यति गहिरोसँग यस विषयमा ध्यान दिएको जस्तो हामीलाई लागेन ।

चाहे जैन पद्धति होस् वा बौद्ध, चाहे पाशुपत सम्प्रदाय होस् वा शाक्त, चाहे दांडी मार्ग होस् वा शैव, चाहे चामुण्डा सम्प्रदाय होस् वा साधना मार्ग, चाहे वाम मार्ग होस् वा अघोर पंथ– सबैको सीमा हुनुहुन्छ हाम्रा परमपूज्य गुरुदेव । आज उहाँजस्तो श्रेष्ठ रसायन तथा पारद विज्ञानको ज्ञाता कोही छैन। सन् १९८८ मा गुरुदेवले चन्द्रोदय जल निर्माणको विधि र त्यसबाट सबै रोगको उपचार जुन प्रकारले बताउनु भएको थियो त्यो आश्चर्यजनक थियो किनकि चन्द्रोदय जल पारदलाई बाँधनको लागि प्रयोग गरिन्छ । यस्ता दिव्य परमपूज्य गुरुदेवको चरणमा हामी रहन पाइरहेका छौँ, हामीलाई यसमा गर्व छ । क्रमश: जय गुरुदेव !

**थाहापाई राखे काम लाग्न सक्छ**

## सिद्धाश्रम शक्ति केन्द्रको नयाँ इमेल ठेगाना

The new email address of Siddhashram Shakti Kendra

**info@ssk.org.np**

gonisa@ntc.net.np

# सावधान! युग परिवर्तन भइरहेछ

हालै भएका कृषि अनुसन्धानका रिपोर्टहरूअनुसार अत्यधिक कीटनाशक औषधि प्रयोगका कारण कृषिजन्य माटोको विषाक्तता बढेको छ जसको कारण त्यसमा उत्पादन हुने अन्न, तरकारी सबै नै विषालु हुन्छन् र तिनले मानव स्वास्थ्यलाई हानि गर्दछन् । यसप्रकारको विषालुपनालाई निर्मूल गर्ने एउटै उपाय वैज्ञानिकहरूले बताएका छन्- गाईभैंसीको गोबरबाट बनेको कम्पोष्ट मल प्रयोग गर्ने, रसायनिक मल तथा कीटनाशक औषधिहरू कम प्रयोग गर्ने ।

यही नियम हाम्रो शरीरमा पनि नजानिँदो तरीकाबाट लागू भइरहेको छ । प्राकृतिक आहार छोडेर नाना भाँतीका फास्टफुड, सिन्थेटिक फुड, ड्राइ फुड, फ्राइड फुड आदि खान पल्केका छौँ । सुत्ने, उठ्ने कुनै ठेगान हुँदैन, ऋतु, मौसम केही मतलब हुँदैन मनलागी गरिरहेका हुन्छौँ । सानो रोग लागे पनि ठूला डोज र प्रभाव भएका एन्टिबायोटिकहरू खाइरहेका हुन्छौँ जसले गर्दा हाम्रो शरीरमा पनि विषाक्तता फैलिरहेको हुन्छ । विविध मेडिकल रिपोर्टहरूका अनुसार अधिकांश बिरामीहरूमा कतिपय एन्टिबायोटिकहरूलाई पनि प्रतिरोध गर्ने क्षमता वृद्धि भएको पाइएको छ जसले गर्दा औषधिले पनि काम नगर्ने स्थिति पैदा भइरहेको छ । माटो बिग्रिएजसरी नै जब हाम्रो शरीर एकपल्ट बिग्रन्छ वा हेलचेक्र्याइँले दीर्घकालीन रोग लाग्दछ तब न चिच्याएर हुन्छ न रोएर वा कराएर ।

कत्तिको बुझ्नुहुन्छ करोडपति डाइबिटिज रोगीको पीडा ? आफ्नै अगाडि कामदारले नाना परिकार खाएर मस्ती गरेको दृश्य जो टुलुटुलु हेरेर बस्छ । कत्तिको अनुभव गर्नुभएको छ एच.आइ.भी. रोगीका डर र चिन्ता; पत्थरीको रोगीको दु:खाइ; हृदयाघात, अम्लपित्त, दम, उच्च रक्तचाप, मस्तिष्क रोग आदिबाट पीडितका व्यथा ? यी त जसले आफ्नो स्वास्थ्यको बारेमा ख्याल राखेनन्, उनीहरूले मात्र भोगेर पीडा अनुभव गर्ने हुन्, स्वास्थ्यको महत्व थाहा पाउने हुन् ।

सिप्रोफ्लोक्जासिन बढी मात्रामा प्रयोग गरिने औषधि हो तर धेरैको शरीरमा अब यसले काम गर्न छाडेको छ । त्यसैले बढी प्रभावकारिता (High spectrum) भएका नयाँ पुस्ता (New generation) का औषधिहरू चलाउनुपर्ने हुन्छ ।

बोल्नेको पीठो बिक्छ नबोल्नेको चामल बिक्दैन भनेझैं इमरजेन्सी र सर्जरीमा पश्चिमा चिकित्सा पद्धति धेरै अगाडि छ भन्दैमा भएभरका रोगहरू त्यतैबाट ठीक हुन्छन् भन्ने सोचाइ राख्नु अज्ञानता हुनसक्छ । दीर्घकालीन र जीर्ण रोगहरू, मानस रोगहरू, शोक, भोग, चिन्ता र नकारात्मक शक्ति आदि कारणहरूबाट उत्पन्न भएका रोगहरूको उपचार आयुर्वेदमा जस्तो स्पष्ट अन्य कुनै प्रणालीमा पाइएको छैन, भए पनि काम चलाउ र आलटाल पार्ने खालका छन् ।

मधुमेह अर्थात् डाइबिटिज भयो, कतिदिन लिनुहुन्छ इन्सुलिनको इन्जेक्सन ? मस्तिष्कको रोग लाग्यो, वेदनाजनित रोग लाग्यो, कति दिन खानुहुन्छ निद्राका गोली (Hypnotic drug), कति दिन खानुहुन्छ वेदनानाशक (Analgesic) र संज्ञानाशक (Sedative) औषधिहरू ? अम्लपित्त अर्थात् ग्याष्ट्रिक भयो, कति दिन चलाउनुहुन्छ पेन्टाप्राजोल, ल्यान्सोप्राजोल, रेनिटिडिन जस्ता पार्श्व असर भएका र क्ल्यारिथ्रोमाइसिन जस्ता महंगा औषधिहरू ? यसको एउटै उत्तर छ जीवनभर अर्थात् नमरुन्जेल । के यही नै तपाईंको रोगको सफल उपचार हो ?

टाउको फुट्लाझैं दु:खिरहेको छ, जीउ, छाती कम्मर दु:खिरहेको छ, पोलिरहेको छ, डाह र छटपटी भइरहेको छ, अनि तपाईं जानुहुन्छ नामुद अस्पतालमा । एक्स रे, सि.टि. स्क्यान, एम्.आर.आइ., ब्लड काउन्ट, कल्चर जे जे गर्नुपर्ने सबै गरिसक्दा पनि तपाईंको रोगको कुनै अत्तोपत्तो हुँदैन । डाक्टर भन्छन्- 'केही छैन, दिमागी भ्रम हो' । तर तपाईंको पीडा कसले बुझ्ने ? दु:खाइ कम गर्ने, निद्रा लगाउने, लट्याउने वर्गका औषधिहरू पेलेको पेल्यै, रोगको कारण जस्ताको तस्तै ।

कतिपय रोग पत्ता लागेका हुँदैनन् । डाक्टरले अंग्रेजीमा idiopathic वा Unknown cause (भन्नाले कारण थाहा नभएको रोग) भनेर लेखिदिन्छन्, हामी मख्ख- 'मेरो रोग त इडियोप्याथिक रै छ नि !' त्यसैले त हामी भन्छौं महान्यूनता छ, व्यापार बढ्दो छ । जुनसुकै प्रणालीका अधिकांश स्वास्थ्यकर्मीहरू ग्राहकलाई त्यति सजिलै कहाँ अन्त जान दिन्छन् र ? रोग निको हुने छेउ टुप्पो छैन, नमरुन्जेलसम्म रोगी क्लिनिक धाइरहोस्, रोग ठीक भए पनि नभए पनि पैसा चाहिँ आइरहोस् भन्ने जस्ता सुकोमल स्व-सेवापरक भावनाबाट अभिप्रेरित भएका पाइन्छन् । एउटा धामी वा झाँक्रीकहाँ क्यान्सर रोग नै लिएर गए पनि बिसेक पार्न सक्छु भनेर ढचाङ्ग्रो ठोक्न थालिहाल्छ । आफूले नसकेको रोग अन्त रिफर गरिने प्रचलन लगभग हराइसकेको छ । रिफर गर्न खोजे पनि कसलाई गर्ने ? कहाँ गर्ने ?

आयुर्वेद महाविज्ञान हो तर आजको अवस्थामा आयुर्वेदको नाममा हुने व्यापार र उपचार सबै नै ठीक हुन् र सही काम गर्छन् भन्न सकिने अवस्था छैन । आयुर्वेदको उद्गमस्थल

अध्यात्म हो, दैवी सत्ता हो । उपचारको मूल आधार तपस्या, अनुशासन हो, सिद्ध पुरुषद्वारा लिखित ग्रन्थहरू हुन् तर आज यीमध्ये अधिकांश हराइसकेका छन् । आयुर्वेद औषधि निर्माणमा पनि धेरै विकृति आएका छन् । स्वार्थवश शास्त्रमा भनिएअनुसारका जडिबुटी नराख्न सक्छन्, अन्य मिसावट हुनसक्छ, बनाउँदा विधि नपुग्न सक्छ, कम गुणस्तरका जडिबुटी प्रयोग हुन सक्छन् । उपचारकमा वात-पित्त-कफ, नाडी विज्ञान आदिको पूर्ण ज्ञान नहुन सक्छ ।

यसरी एकातर्फ स्वास्थ्यलगायत जताततै झूट, ठगी, लोभ, स्वार्थले तीव्ररूपमा जरो गाडिरहेको छ भने अर्कोतर्फ सत्यता, शान्ति, आध्यात्मिक युगका लागि पनि त्यत्तिकैरूपमा जुर्मुराइरहेका छन् । कसैले योग र आयुर्वेद, कसैले मन्त्र-तन्त्र-यन्त्र, कसैले ज्योतिष जागरण गरिरहेका छन् । कसैले भजन, प्रवचन र सेवामूलक कार्यहरूलाई बढाइरहेका छन् । राम्रा र नराम्रा पक्ष दुवै नै द्रुत गतिमा हावी भइरहेका छन् । जता गए पनि युग द्रुत गतिमा जाँदैछ । आखिर जसरी भए पनि युग त परिवर्तन भइरहेको छ नि ! होइन र ?

त्यसैले हामी भन्छौं यो संक्रमण काल हो । संक्रमण कालमा जसले सक्छ उसैले बजाउँछ । कसैले कसैलाई अन्ध-विश्वास गर्ने समय छैन । कुनै नीति नियम, कुनै वाद र प्रणालीले पूर्णरूपमा काम गरिरहेको हुँदैन । त्यसैले होशियार हुने, सावधान हुने तपाईं नै हो । अलिकति विचार पुऱ्याउनु भएन भने स्वास्थ्य क्षेत्रमा पनि फस्न सक्ने सम्भावना उत्तिकै रहन्छ । पैसा लुटेको लुट्यै, रोग उस्ताको उस्तै ।

त्यसैले हामीले दिन सक्ने सुझाव यत्ति हो कि स्वास्थ्य रक्षा गर्नुहोस्, निरोगी र निर्भीकताको जीवन जिउनुहोस् । स्वास्थ्य रक्षाका अमूल्य सूत्रहरू जहाँबाट लिएर पनि अपनाउन सक्नुहुन्छ तर आयुर्वेदमा जस्तो अन्य चिकित्सा प्रणालीमा पाउन सक्नुहुन्न । रोग लागेर रुनु, चिच्याउनु, दशौं ठाउँ धाएर ठगिनुभन्दा पहिले नै सजग हुनु बुद्धिमान् हो भन्ने कुरा त सबैलाई थाहा नै छ । त्यसैले स्वास्थ्य रक्षाका लागि मद्दत पुग्ने केही **महत्वपूर्ण सुझावहरु** यहाँ दिन गइरहेका छौं जसलाई लागू गरेर धेरैभन्दा धेरै फाइदा लिन सक्नुहुनेछ ।

१. स्वास्थ्यभन्दा ठूलो धन केही छैन भन्ने कुरालाई गम्भीरताका साथ लिनुहोस्, सोच्नुहोस् ।

२. स्वस्थ हुँदा पनि समय समयमा आफ्नो शारीरिक र मानसिक स्थितिको ख्याल राख्नुहोस् । प्रत्येक दिनको केही समय स्व-स्वास्थ्य र पारिवारिक स्वास्थ्यको चिन्तनमा खर्चनुहोस् ।

३. स्वास्थ्य रक्षाका मूल आधारस्तम्भहरू योग र आयुर्वेदको अभ्यास शुरु गर्नुहोस् । यसका लागि घर वरपर वा गमलामा सजिलै लगाउन सकिने जडिबुटीहरू जस्तैः तुलसी, कागतीघाँस, घोडताप्रे, घ्यूकुमारी, अदुवा, बेसार, लसुन, धनियाँ, दूबो, गुर्जो, गुडमार, पुदिना, चांगेरी, बोझो, पाषाणभेद आदि र स्थानीयरूपमा पाइने अन्य जडिबुटीहरू लगाउनुहोस् । बुझेर तिनीहरूको प्रयोग गर्ने बानी बसाल्नुहोस् ।

४. सम्पूर्ण चिकित्सा प्रणालीले व्यायामलाई प्राथमिकता दिएको पाइन्छ । त्यसैले निरन्तर योगासन, प्राणायामहरूको अभ्यास गर्नुहास् ।

५. स्वास्थ्यको मूल आधार पाचन शक्ति हो । यो मजबुत छ छैन, दिशा, पिसाब, खानाको रुची, अरूचीको ख्याल गर्नुहोस् ।

६. घरमै गर्न सकिने सरल उपचार हरूको बारेमा विज्ञहरू वा विश्वासिला ग्रन्थहरूबाट जानकारी लिनुहोस्, प्रयोग गर्नुहोस् ।

७. घरका अभिभावकहरू, वरपरका अनुभवी बूढापाका तथा वैद्यहरूसँग रोगोपचारका सरल विधिहरू हुन सक्छन् । सम्भव भएमा तिनीहरूलाई नोट गर्दै जाने र प्रयोग गर्ने बानी बसाल्नुहोस् ।

८. स-साना सामान्य रोगहरू जस्तै रुघा, खोकी, ज्वर, थकाइ आदिलाई घरमै गरिने परम्परागत तरीकाबाट उपचार गर्ने कोशिश गर्नुहोस् न कि एन्टिबायोटिकहरू खाएर ।

९. मानसिक शान्तिका लागि सुमधुर संगीत, भजन आदि श्रवण गर्नुहोस् ।

१०. आयुर्वेदअनुसार दिनचर्या, रात्रिचर्या, ऋतुचर्या अपनाउनुहोस् । विभिन्न ऋतुहरूमा लाग्नसक्ने रोगहरूबारे पहिले नै सतर्क हुनुहोस् ।

११. बेला-बेलामा विज्ञको सल्लाह लिए शरीर शोधन गर्नुहोस् । शरीर शोधन औषधि वा पञ्चकर्म दुवैबाट गर्न सकिन्छ ।

१२. वय स्थापक आयुर्वेद रसायन औषधिहरू सेवन गर्नुहोस् जसले तपाईंलाई चाँडो बूढो हुन, रोग लाग्न र कमजोर हुन दिँदैन ।

१३. रोगका कारणहरूमध्ये जीवनमा ग्रहहरूको नकारात्मक प्रभाव पनि प्रमुख हो । त्यसैले यस प्रभावलाई न्यून गर्नका लागि ज्योतिष विज्ञहरूको सल्लाह लिनसक्नुहुन्छ । दान, मन्त्र जपका साथै रत्नहरू धारण गरेर अगाडि बढ्न सक्नुहुन्छ ।

१४. ज्ञात अज्ञात कारणहरूबाट लागेका समस्त प्रकारका रोगहरू निर्मुल गर्न, दीर्घकालीन वेदना शान्तिका लागि, भोग्नैपर्ने रोगहरू कम गर्न, जीवनमा पूर्णता प्राप्त गर्न सक्षम सद्गुरुदेवहरूको शरणमा जानुहोस् । उहाँहरूबाट प्राप्त ध्यान, मन्त्र जप, हवन, पूजनजस्ता आध्यात्मिक कार्यक्रमहरूमा भाग लिनुहोस् ।

जय गुरुदेव !

# वमन धौति

कल्पना गरौँ हामीले खाना पकाउने भाँडा केही दिनसम्म नमाझिकन त्यसैमा पकाइरहौँ वा त्यतिकै छाडौँ, के होला ? अवश्य पनि ४-५ दिनमा नै भाँडा कालो हुन थाल्दछ । खानाको पत्र नै बस्न सक्दछ । फोहार र दुर्गन्धित हुन थाल्दछ । केही दिन सफा नगर्दा खाना पकाउने भाँडाको हालत त यस्तो हुन्छ भने वर्षौंसम्म हामीले हाम्रो अन्ननली अर्थात् पाचन प्रणालीका अङ्गहरू सफा नगर्दा के भइरहेको होला ? दिनको तीनपटक वा सोभन्दा बढी खाने गर्दछौँ तर भित्री सफाइ कहिल्यै गरेका छैनौँ । कति फोहोरका तह, विकार जम्मा भएका होलान्, कल्पना गर्नुभएको छ ? आखिर यही त हो रोगको कारण । बिस्तारै खानाको पाचनमा, पचेका अन्नको शोषणमा ढिलासुस्ती र गडबडी हुन थाल्दछ । त्यसबाट नै अनेकौं रोगहरू निस्कन थाल्दछन् । त्यसैले रोग लाग्नुभन्दा पहिले नै समय समयमा शरीर शोधन गर्न सकियो भने धेरै ठूल्ठूला रोगहरूबाट पनि बच्न सकिन्छ । रोगीहरूले पनि औषधिहरू सेवन गर्नु अगाडि शोधन क्रियाहरू सम्पन्न गरेमा रोग चाँडो निको हुन मद्दत पुग्दछ ।

योग र आयुर्वेद पद्दतिमा शरीर शोधनको विषयलाई धेरै महत्व दिइएको पाइन्छ। शरीर शोधनका लागि अत्यन्तै सरलदेखि अत्यन्त जटिल र विशिष्ट प्रक्रियाहरू षट्कर्म र पञ्चकर्मका विधिहरू पाइन्छन् ।

पञ्चकर्म र षट्कर्म पूर्णरूपले वैज्ञानिक छन् । विदेशीहरू पनि यिनै क्रियाका लागि नेपाल आउने गर्दछन् । तर हालसम्म नेपालमा पञ्चकर्म र षट्कर्मका क्रियाहरू सुव्यवस्थितरूपमा कमै मात्रामा सञ्चालन भएका पाइन्छन् ।

शरीर शोधनका क्रममा सामान्यतया वमन धौतिमा नून पानीको प्रयोग गरिन्छ । वस्ती क्रियामा विविध जडिबुटीका क्वाथहरूको प्रयोग गरिन्छ । यस प्रकारका तरल पदार्थ हाम्रो आमाशयमा, वस्तीमा पठाउँदा अस्मोसिस (Osmosis) क्रियाबाट प्रत्येक कोषभित्र, कोषबाहिर वा बीचमा भएका विकारहरू, फोहोरहरू उक्त पानी वा क्वाथमा सोसिन्छ । केही समयपछि फोहोरले भरिएका ती तरललाई शरीर बाहिर निकाल्ने कार्य गरिन्छ । यसरी हाम्रो शरीर शोधन भइरहेको हुन्छ ।

योगशास्त्रहरूमा वर्णित षट्कर्ममध्ये एउटा धौति क्रिया हो। धौतिको सामान्य अर्थ धुनु हो । सामान्यतया आमाशय शुद्धिकरण गर्ने वा धुने प्रक्रियालाई धौति क्रिया भनेर बुझिन्छ। धौति क्रिया पनि चार प्रकारले सम्पन्न गर्न सकिन्छ– १.वमन धौति, २.गजकरणी, ३.वस्त्र धौति र ४.दण्डधौति । यी चारवटा धौति क्रियाहरूमध्ये पनि अत्यन्तै सरल वमन धौति क्रिया हो । यसै क्रियाको बारेमा हामी यस अंकमा चर्चा गर्न गइरहेका छौँ ।

**वमन धौति गर्ने तरीका :**

ब्रह्ममुहूर्तको समयमा उठ्ने । शौचादि क्रियाहरूबाट निवृत्त भइसकेपछि यो क्रिया सम्पन्न गर्न सकिन्छ ।

सबैभन्दा पहिला १-२ लिटर पानी उमाल्ने र सेलाउन दिने । मनतातो भएपछि अलिकति (२-४ चम्चा) नून हालेर चलाउने । जति सम्भव हुन्छ त्यति नै प्रयत्नपूर्वक नून पानी पिउने । त्यसपछि केही अगाडि (९० डिग्रीमा) झुक्ने । बायाँ हातको बीचको दुईवटा औंलाहरूलाई मुखमा हालेर घाँटीको पछिल्लो सतहमा उल्टी नहुन्जेल स्पर्श गराइरहने । केही समयमा नै वमन भएर पानी बाहिर निस्कन्छ। यसबेला दुवै खुट्टा नजिक राख्नुपर्दछ । यस क्रियामा पानी पूरै एकैचोटि बाहिर आउँदैन त्यसैले आफूले जति पिएको छ, अनुमान गर्ने र लगभग त्यति जति नै पानी ननिस्कुन्जेल उल्टी गरिरहने । यस क्रममा अन्ततिर अमिलो पानी अर्थात् आमाशयमा भएका अम्लहरू पनि निस्कने गर्दछन् ।

**सावधानी**

यो क्रिया गर्न केही गाह्रो हुनसक्छ। जसको आँखा दुख्ने वा अधिक रातो हुने, टाउको दुख्ने, धेरै रिँगटा लाग्ने, अति कमजोरी जस्ता रोगहरू छन्, उनीहरूले यो क्रिया बलपूर्वक गर्नुहुँदैन। वमन गर्दा धेरै तल झुक्नु हुँदैन, साथै धेरै सीधा भएर पनि गर्नु हुँदैन ।

**लाभ**

वमन धौतिबाट आमाशयमा स्थित कफ, पित्त एवं नपचेका अन्नहरू बाहिर निस्कन्छन् । पाचन प्रक्रियामा सुधार आउँछ । त्यसैले यो क्रिया स्वस्थ व्यक्तिहरूका साथै विविध प्रकारका रोगीहरूलाई पनि फाइदाजनक छ । जसलाई श्वास, दम, अजीर्ण, अपच, अरूची आदि र अम्लपित्त अर्थात् ग्याष्ट्रिक जस्ता रोगहरू लागेका छन्, त्यस्तो रोगीले यो क्रिया सम्पन्न गर्नुपर्दछ। रोगको वेग कम हुँदै गएपछि यस क्रियाको अभ्यासलाई पनि कम मात्रामा गर्न सकिन्छ । यस क्रियालाई हप्ताको एकपटक सम्पन्न गर्नुपर्दछ ।

जय गुरुदेव !

# अनुभव त यति छन् कि.........

म आश्रममा २०५७ सालमा गणेश साधनाताका जोडिएकी हुँ । त्यसबेला आश्रम कमलादीमा थियो । त्यतिबेला म ज्ञानेश्वरमा बस्दथेँ । म सधैँ कुमारीथान (कमलपोखरी) को दर्शन गर्न हातमा फूल लिएर कसैसँग नबोलीकन जान्थेँ । एकदिन दर्शन गर्न जाँदा त्यहाँका पूजारीले मलाई तपाईँलाई एकजना बहिनीले खोज्दै हुनुहुन्थ्यो भनेर भने । म चुप लागेर नबोलीकनै कुमारीथानको दर्शन गर्न गएँ । त्यहाँ दर्शन गर्दा त एकजना लामो दाह्री, तेजस्वी मुहार भएका संन्यासीले पनि दर्शन दिनुभयो । उहाँलाई देखेपछि त मलाई कहाँ-कहाँ पुगेजस्तो, उडेको जस्तो, कस्तो-कस्तो भयो । शरीर फूलजस्तो हल्का लाग्यो । केही बेरपछि झल्याँस्स भएँ । हेर्दा त उहाँ त्यहाँ हुनुहुन्थेन । अनि उठेर मन्दिरको परिक्रमा गर्न थाल्दा फेरि उहाँलाई त्यहीँ देखेँ । तीनपटक परिक्रमा गरेर उहाँको दर्शन गरेँ । मन्दिरमा दर्शनपश्चात् मलाई बोलाउने बहिनीको घरमा गएँ । उहाँ घरमा हुनुहुँदो रहेनछ । साधना कार्यक्रम सम्पन्न हुन गइरहेकोले घर नजिकै कार्यक्रमस्थलमा जानुभएको रहेछ । उहाँको भाइले मलाई त्यस कार्यक्रमस्थलसम्म पुर्‍याएर उहाँलाई भेटाइदिनु भयो । त्यहाँ त मैले जुन संन्यासीको दर्शन मन्दिरमा पाएको थिएँ, उहाँको तस्वीर अगाडि राखिएको रहेछ । ती संन्यासी त परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुँदो रहेछ । बहिनीले मलाई कार्यक्रमस्थलमा बस्न भन्नुभएकोले कार्यक्रममा सहभागी भई बेलुकी घर फर्केँ ।

एकदिन कोठामा पल्टिरहेकी थिएँ । त्यसैबेला कसैले 'धेत् उठ्' भनेको सुनेँ । उठेर यताउता हेरेँ कसैलाई देखिन । अनि म उठेर कतै हिडेँ, बाटोमा जैन भवन पर्दथ्यो, त्यहाँ गुरु च्यादर ओढेर मानिसहरू उभिएका रहेछन्, कार्यक्रम भइरहेको रहेछ । त्यहाँ दिनभरि कार्यक्रम भयो, भाग लिएर फर्केँ । मलाई पहिलेदेखि नै बेसुर हुने रोग थियो, छिनछिनमा सुर हराउँथ्यो, मानिसहरूले अनेक थरी कुरा गर्दथे । त्यो कार्यक्रममा भाग लिएको लगभग एक महिना जति पछाडि होला, मलाई अलि बढी नै बिसन्चो भएको थियो । म सुतिरहेकी थिएँ, त्यसबेला निखिलेश्वर गुरुदेव देखा पर्नुभयो, म उठेर चुपाचाप हात जोडेर बसिरहेँ । गुरुदेवले ढ्यांग्रो ठोकेर तीनपटक मेरो वरिपरि घुम्नुभयो । त्यसपछि म उठेँ, मलाई एकदमै हलुको भएको अनुभव भयो ।

एकपटक मैतीदेवी मन्दिरमा पुग्दा त्यहाँ जता हेरे पनि गुरुदेवलाई नै देखेँ, वरको रूखमा पनि गुरुदेव, पीपलको रूखमा पनि गुरुदेव, मैतीदेवी मातामा पनि गुरुदेव । आश्रम आउँदा आश्रमभित्र पनि दुईजना गुरुदेवहरूलाई देखेँ । एकदिन राति सुतिरहेको बेला झण्डै बाह्र बजेतिर गुरु गोरखनाथ आउनुभएर सशरीर दर्शन दिनुभयो । एकपटक पुष महिनामा मलाई निमोनिया भएको थियो । डाक्टरलाई जचाएर औषधि खाइरहेकी थिएँ । त्यसैबेला मलाई सपनामा निखिलेश्वर गुरुदेवले 'पानीको बाफ लेऊ, औषधि खानु पर्दैन' भन्नुभयो । सपनामा गुरुदेवले भन्नुभएको कुरालाई मैले वास्ता नगरी पहिले औषधि खाइसक्छु अनि पानीको बाफ लिउँला भन्ने सोचेँ । तर मलाई निको भइरहेको थिएन । अर्को एकदिन जपमा बसिरहेकी थिएँ, गुरुदेवले मलाई थप्पड हान्नुभयो र भन्नुभयो 'मैले भनेको गरिनस्, गल्ती गरिस्' । त्यसपछि मैले रोएर 'हे प्रभु मैले गल्ती गरेँ भनेर क्षमा मागेँ । अनि त्यसपछि गुरुदेवले भने बमोजिम गरेँ । त्यति औषधि खाँदा पनि निको नभएको रोग गुरुदेवको आदेशअनुसार गर्दा सहज नै निको भयो ।

मलाई लेख्न आउने भए मलाई भएका अनुभवहरू कति लेख्थेँ होला, त्यसको बयान नै गर्न सक्दिन । साधनाको क्रममा भएका अनुभवहरूलाई म लेख्न नजान्ने भएकोले बुहारीलाई लेख्न लगाएकी थिएँ, त्यसमा धेरै कुराहरू थिए तर पछि घर सर्ने बेलामा त्यो कापी हरायो । अहिले त धेरै अनुभवहरू बिर्सिसकेँ । सूर्य भगवान्को साधना गरेपछि स्वयं सूर्य भगवान् आएर मलाई दर्शन दिनुभयो । अहिले पनि म ध्यानमा बसेको बेलामा सूर्य भगवान्को दर्शन पाउँछु जसबाट एकदमै आनन्द प्राप्त हुन्छ । हनुमान् साधना गरेको बेलामा हनुमान्ज्यू आएर आफ्नो छाती चिरेर राम र सीताको दर्शन पनि गराउनु भएको थियो । यस्तै क्रममा कुनै बेला माता कालीले दर्शन दिने, कुनै बेला सन्तोषी माताको दर्शन मिल्ने भएको छ । एकपटक साई बाबाको पनि दर्शन पाएको छु । साउन महिनाको समयमा एकदिन म बत्ती कातेर बसिरहेँकी थिएँ, गुरुदेव निखिलेश्वरानन्द महाराज आएर कृष्णस्वरूपमा आफ्नो विश्वरूपको दर्शन गराउनु भयो, म त हेर्दाहेर्दै हराएछु । गुरुदेवको मुखभित्र सारा ब्रह्माण्ड थियो । झण्डै पन्ध्र मिनेट म हराएपछि झसङ्ग भएर ब्यूँझदा त म बत्ती नै कातिरहेकी थिएँ । त्यसै समयमा आश्रमद्वारा सञ्चालित मासिक हवनको क्रम चलिरहेको थियो । म प्राय: हवनमा जाने गर्थें । मृगस्थलीमा हुने श्री शिव गोरक्ष हवनमा सहभागी हुँदा गुरु गोरखनाथ बाबाको दर्शन

प्राप्त भएको थियो । बगलामुखी माताको हवनमा सहभागी हुँदा आफ्ना कामहरू सफल भएका अनुभव पनि छन् । यसैगरी २१ तारीखको कार्यक्रममा दुवै गुरुदेवहरूले दर्शन दिनुभएको दिव्य सम्झना पनि मसँग छ। आश्रममा हुने विभिन्न ध्यानहरूमा सहभागी भएकी छु ।

मलाई गुरुदेवले सपनामा आएर भन्नुभयो- 'तँ किन चुप लागेर बसेकी, तैँले अब गुरुकार्य गर्नुपर्छ' । अनि त्यसपश्चात् मैले आश्रम आएर गुरुकार्य गर्न शुरु गरेँ। गुरुकार्य गर्दै अघि बढेर आधारभूत तालिम लिइसकेपछि मात्र आश्रमको कार्यकर्ता बन्ने प्रावधान छ। आश्रम बत्तीसपुतलीमा हुँदाखेरी भान्छामा भाँडा माझ्ने गुरुकार्य पनि गरेँ, पूजाको भाँडा पनि माझियो, सरसफाइ पनि गरियो, चरुको लागि चामल केलाउने गुरुकार्य पनि गरेँ । गोरखामा सवा लाख रोट चढाउने कार्यक्रम सम्पन्न हुँदा खूब चामल केलाउथेँ । त्यसबेला त्यहाँ गोरख गुफाभित्र नवनाथहरूको दर्शन प्राप्त भएको थियो । कार्यक्रम अवधिमा महाशक्ति गोरखकाली माताले पनि दर्शन दिनुभएको थियो । अहिले प्रवेश शिष्टता युनिटमा रहेर आश्रम आउनेहरूलाई 'जय गुरुदेव' भनेर स्वागत गर्ने गुरुकार्य गरिरहेकी छु । कार्यकर्ताका लागि मात्र हुने Special Blessing Meditation मा ध्यान गरेर बस्दा दुवै गुरुदेवहरू कुरा गरिरहनुभएको सुनिने, दुवै गुरुदेवहरू हिडेँको अनुभव हुने, गुरुदेवहरूको स्वरूप देखिने आदि भएको थियो । अस्ति भर्खरै पनि कार्यकर्ताहरूको लागि हुने स्टाफ मिटिङ्गमा सहभागी हुन घरका कामहरू हतार- हतार सकेर आएँ । ढोकानजिकै बसेर प्रवचन सुनिरहेकी थिएँ। अचानक ध्यान लाग्यो र गुरुदेवहरूले मलाई त्यहीँ दर्शन दिनुभयो। आश्रमबाट कार्यकर्ताका लागि सञ्चालन हुने तालिममा सहभागी हुँदा पनि गुरुदेवहरूले त्यहाँ दर्शन दिनुभएको छ । आरतीको समयमा गुरुदेवहरूको फोटो एकदमै चम्किरहेको देखिन्छ र उक्त समयमा दुवैजना गुरुदेवहरू आएर सबैलाई आशीर्वाद दिनुभएको पनि देख्ने गर्दछु ।

अहिले मेरो बस्ने स्थान पनि आश्रमकै नजिकै बसुन्धरामा भएकोले घरबाट बाहिर निस्कने काम परेको बेलामा सम्भव भएसम्म आश्रम गएर गुरु पादुकाको दर्शन गरेर मात्र निस्कने गर्छु । यसो गर्दा कामहरू सफल भएका छन् । अस्ति भर्खरै एकपटक अत्यन्तै हतारमा निस्कनुपरेकोले दर्शन नगरीकन गएँ । बानेश्वर पुगेपछि मैले जान लागेको ठाउँ जति खोजे पनि भेटिन । ठाउँ खोज्दा-खोज्दा हार खाएपछि घरबाट निस्कँदा गुरु पादुकाको दर्शन नगरी निस्केको सम्झेँ । अनि गुरुदेवहरूसँग क्षमा मागेँ। त्यसपश्चात् फनक्क फर्केर अलिकति वर आउँदा म जानुपर्ने ठाउँ सजिलै भेटियो ।

अठसठ्ठी वर्षको उमेरमा आएर ढीलै भए पनि गुरुहरूलाई मान्ने सौभाग्य पाएकी छु । आश्रमसँग जोडिएपछि, गुरुदेवहरूसँग जोडिएपछि ममा धेरै परिवर्तनहरू आएका छन्, समस्याहरू हटेका छन्, गुरुहरूको साथ पाएकी छु । साधना, ध्यान, गुरुकार्य आदि गर्दाका अनुभवहरू त धेरै छन्, कति त बिर्सिसकियो, कति अनुभवहरू 'नभन्ने' आदेश पाएकीले भन्न मिल्दैनन् । जे जति भन्नु उचित लाग्यो त्यति नै मैले यहाँ उल्लेख गरेँ। अब मेरो अन्तिम इच्छा भनेको यो आश्रम ठूलो होस्, फलोस्, फुलोस् । यहाँ पनि एउटा वृद्धाश्रम बनोस् । पछि घरमा हेला गरे भने आश्रमकै वृद्धाश्रममा गुरुहरूको साथ पाएर बस्न पाइयोस् भन्ने छ ।

अन्तमा, म सबैजनालाई यही अनुरोध गर्दछु कि हाम्रो भूत, वर्तमान र भविष्य सबै गुरुको हातमा छ। त्यसैले गुरुहरूलाई धारण गरौँ, गुरुहरूलाई कहिल्यै पनि नभुलौँ, गुरुहरूको आशीर्वाद लिन सदैव लागि परौँ, उहाँको भक्तिमा डुबौँ। जय गुरुदेव !

-सीतादेवी पराजुली,
बसुन्धरा, काठमाडौँ ।

## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आव( श्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा, अनुकम्पा र आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना सञ्चालन गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूको शृंखलाअन्तर्गत माघ महिनाको पहिलो बुधबार अर्थात् १ गते लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन, पहिलो बिहीबार अर्थात् २ गते ललितपुरको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन, पहिलो सोमबार अर्थात् ६ गते पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर परिसरमा श्री शिव गोरक्ष हवन तथा पहिलो मंगलबार अर्थात् ७ गते लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम सम्पन्न भयो । उल्लेखनीय जनसहभागिताबीच सम्पन्न हुँदै आएका यी हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजे सञ्चालन हुने गरेको छ भने बाँकी हवन कार्यक्रमहरू बिहान ८:०० बजे सञ्चालन हुने गर्दछन् ।

यस्तै मासिक हवनकै शृंखलामा सम्पर्क कार्यालय पोखरा रामघाटको आयोजनामा पहिलो बुधबार अर्थात् १ गते स्थानीय विन्ध्यवासिनी मन्दिर परिसरमा तान्त्रोक्त विन्ध्यवासिनी हवन सम्पन्न भयो । यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा माघको पहिलो बिहीबार अर्थात् २ गते स्थानीय वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन सम्पन्न भयो । पोखरा र तनहुँमा सम्पन्न भएका यी हवन कार्यक्रमहरू पनि बिहान ८:०० बजे सञ्चालन हुने गर्दछन् ।

हरेक महिना सञ्चालन हुने दिव्य हवन कार्यक्रमहरूमा सहभागिता जनाएर सहजरूपमा दैवी कृपा, आशीर्वाद प्राप्त गर्न सकिने हुनाले यस्ता कार्यक्रमहरूमा सहभागीहरूको सङ्ख्या दिनानुदिन बढ्दो छ ।

## दिव्य गुरु महोत्सव

आफ्नो स्थापनाकालदेखि परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरण भएको दिन अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा हरेक महिना मनाउँदै आउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत महिना पनि यस महोत्सवलाई भव्यरूपमा सम्पन्न गर्‍यो । गत माघ ८ गते बुधबारका दिन बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा उक्त कार्यक्रम आयोजना भएको थियो । बिहान १०:१५ बजे परमपूज्य सद्गुरुदेवहरूको प्रार्थना, गोरक्ष निखिल स्तवनको सामूहिकरूपमा सस्वर पाठबाट शुभारम्भ भएको उक्त कार्यक्रम दुईवटा चरणमा विभाजित थियो । कार्यक्रमको पहिलो चरणअन्तर्गत गुरु चरण पादुका पूजन, मन्त्रजप/ध्यान, हवन, लक्ष्यदीप अर्पण, आरती आदि कार्यक्रमहरू रहेका थिए । कार्यक्रममा गुरु पादुकाको पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै साधक महेश डंगोल, साधिका मोहनदेवी डंगोल तथा साधक विकास न्यौपानेले प्राप्त गर्नुभएको थियो भने लक्ष्यदीपको व्यवस्था साधिका उमा कुँवरले गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरणमा सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गुरुसेवा दल नं. २३ की सदस्य साधिका ज्ञानु रेग्मीले स्वागत मन्तव्य राख्नुभएको थियो । दोस्रो चरणका अन्य क्रमहरूमा भजन-कीर्तन, नृत्य, पुरस्कार वितरण, प्रवचन आदि रहेका थिए । गोरक्ष निखिल वाणी पत्रिकाको २० जना वार्षिक सदस्य बनाई परमपूज्य सद्गुरुदेवप्रदत्त विशेष शक्तियुक्त 'विशेष धारण माला' पुरस्कारस्वरूप प्राप्त गर्नेमा साधक पूर्णबहादुर चौधरी, साधक राजु रंजितकार, साधिका मिश्री डंगोल र साधिका विन्दु सिलवाल हुनुहुन्थ्यो ।

प्रवचन/स्ववचनको क्रममा आफ्ना भनाइहरू राख्ने क्रममा सावर पन्थी नं. २ का सदस्यज्यूले 'मेरा भक्ति गुरुका शक्ति' गुरुवाणीको व्याख्या गर्नुभएको थियो । उहाँले भन्नुभयो- 'हाम्रो जप, ध्यान, गुरुकार्य, दैनिक व्यवहारका हरेक कार्यमा गुरुदेवहरूलाई देख्ने प्रयासका साथ भावपूर्ण भएर गर्ने गरौं, तब नै हाम्रो हरेक कार्य सफल र सार्थक हुन्छ ।'

कार्यक्रममा सावर मातृकाज्यूले अमूल्य र सुन्दर जीवनलाई सद्गुरुदेवको अमूल्य उपहारको रूपमा लिएर गुरुभक्तिपूर्ण गुरुकार्यमा समर्पित हुन सिक्नुपर्ने आवश्यकतालाई औंल्याउनु भएको थियो । उहाँले प्रभुको सुन्दर अमूल्य उपहारको सदुपयोग गरेर प्रत्येकले आफ्नो कर्तव्य र धर्मलाई अवलम्बन गर्नुपर्ने बताउनु भएको थियो ।

भजन र संगीतको मस्तीका बीच सञ्चालित दोस्रो चरणमा उपस्थित साधक/साधिका, भक्तजन नृत्यमा रम्नुभएको थियो । कार्यक्रम संचालन सावर पन्थी नं. ३ का सदस्यज्यूले गर्नुभएको थियो ।

## महासरस्वती पूजन

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले गत माघ १८ गते श्रीपञ्चमीको दिन माता महासरस्वतीको पूजन कार्यक्रम सम्पन्न गर्‍यो । कार्यक्रम बिहान ८:०० बजे प्रार्थनाबाट शुभारम्भ भई सद्‌गुरुदेवहरूको स्तुति वन्दना, सरस्वती स्तोत्रादि पाठ पश्चात् गुरु पूजन, महासरस्वती पूजन क्रम सम्पन्न भएको थियो । पूजनको क्रमपछि प्रसाद वितरण तथा केही समय भजनकीर्तन गरिएको थियो । सावर पन्थी नं. ३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको उक्त कार्यक्रममा सावर पन्थी नं. २ र सावर मातृकाज्यूको पनि उपस्थिति रहेको थियो । केन्द्रमा सम्पन्न कार्यक्रममा साधिका सजना अधिकारी, सुमित्रा अधिकारी र साधक अमोद अधिकारीले पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । ज्ञान, बुद्धि र विवेककी अधिष्ठात्री माता सरस्वतीको कृपा प्राप्त गर्ने उद्धेश्यले कार्यक्रममा सहभागी हुन आउनुहुने साधक साधिका, भक्तजनहरूको संख्या उल्लेखनीय रहेको थियो ।

केन्द्रीय कार्यालयको अलावा विभिन्न सम्पर्क कार्यालयहरू एवं गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा पनि महासरस्वती पूजन सम्पन्न भएको थियो ।

## आ.उ.ने. तहको तालिम सम्पन्न

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिना विभिन्न तह र तप्कामा रहेर गुरुकार्यमा लागेका आफ्ना कार्यकर्ताहरूलाई तहगतरूपमा तालिम तथा प्रशिक्षण प्रदान गर्ने क्रममा गत माघ २० र २१ गते आध्यात्मिक उप-नेतृत्वकर्ताहरूका लागि तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गर्‍यो । काठमाडौँको अग्रवाल भवन, कमलपोखरीमा सम्पन्न भएको उक्त तालिममा सहभागी हुन विभिन्न जिल्लाहरुबाट जम्मा ६९ जना कार्यकर्ताहरू आउनुभएको थियो । द्विदिवसीयरूपमा सञ्चालित उक्त कार्यक्रम दुवै दिन बिहान १०:०० बजे प्रार्थनाबाट शुरु भई सद्‌गुरुदेवहरूको स्तुति वन्दना, गुरु पूजन सम्पन्न भएपश्चात् विभिन्न विषयमा प्रशिक्षण सम्पन्न भई बेलुकी ५:०० बजेको गुरु आरतीपश्चात् सम्पन्न भएको थियो । बीचबीचमा भजन, नृत्य आदि क्रमहरू पनि समावेश भएका थिए । प्रशिक्षणको क्रममा सिद्धाश्रम शक्ति केन्द्रका मासिक एवं वार्षिक कार्यक्रम, गोरक्ष निखिल वाणी पत्रिका, प्रशासनिक संयन्त्र, संगठन, साधक साधिकाको आचरण, ध्यान र ज्ञानका विषयहरू समावेश थिए भने प्रयोगात्मकरूपमा तान्त्रिक मनष ध्यानको अभ्यास पनि सम्पन्न भएको थियो ।

गुरु पूजनको क्रममा पहिलो दिन शिवराम बानियाँ, शेखरनिधि पौडेल, विनोदकुमार श्रेष्ठ र केशव पाण्डे तथा दोस्रो दिन नागेश कँडेल, शेखर पौड्याल, सन्तुमाया लामिछाने, सानुमैयाँ महर्जन, लोगकुमारी तिमिल्सिना, सोनियाँ कुँवर र शान्ता श्रेष्ठले गुरु पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङअनुसार कार्यकर्ताहरू नारायणबाबु धिताल, पारिजात बराल, शिवराम बानियाँ, लोगकुमारी तिमिल्सिना, श्रीधरा भुर्तेल, ज्योति सैँजू, ज्योति महर्जन, सजना योगी र नारायणकाजी मानन्धर आध्यात्मिक उप-नेतृत्वकर्ताबाट विकसित भई आध्यात्मिक सह-नेतृत्वकर्ता तहमा प्रवेश गर्नुभएको थियो ।

## पोखरामा भजन-कीर्तन

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादस्वरूप सम्पर्क कार्यालय पोखराको आयोजनामा घाचोकमा गत माघ ११ गते शनिबार भजनकीर्तन एवं परिचयात्मक कार्यक्रम सम्पन्न भयो । स्थानीय बाल कल्याण प्रा. वि., पाटनमा बिहान ११:१५ बजेदेखि शुरु भएको उक्त कार्यक्रम दिउँसो २:१५ सम्म चलेको थियो । कार्यक्रममा आश्रमको भजन टोली र स्थानीय भजन टोलीले लोक तथा चुट्का भजन प्रस्तुत गरेका थिए । भजनको बीचबीचमा सद्‌गुरुदेव एवं आश्रमको संस्थागत परिचयको क्रम सँगसँगै चलेको थियो ।

## दमौलीमा कविता प्रतियोगिता

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय तनहुँले गत माघ १७ गते कविता प्रतियोगिताको आयोजना गर्‍यो । व्यास नगरपालिका वडा नं. ६ को नेपालटारमा आयोजित उक्त प्रतियोगितामा चारवटा विद्यालयबाट उनन्तीसजना प्रतियोगीको सहभागिता रहेको थियो ।

प्रतियोगितामा जन जुक्त शाही माध्यमिक विद्यालयकी सन्ध्या रेग्मी, मनकामना बोर्डिङ्ग स्कुलकी मनीषा वाग्ले र जन जुक्त शाही माध्यमिक विद्यालयका भाष्कर रेग्मी क्रमश: प्रथम, द्वितीय र तृतीय भएका थिए । प्रतियोगितामा इन्दु माध्यमिक विद्यालयका कोपिला पण्डित र शोभा वि.क.ले सान्त्वना पुरस्कार प्राप्त गरेका थिए ।

## तनहुँ स.का. झाँकीमा प्रथम

गत पौष २५ गतेदेखि माघ ५ गतेसम्म तनहुँको दमौलीमा आयोजित तनहुँ महोत्सवमा सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय तनहुँ दमौलीले झाँकीमा सहभागी भई प्रथम स्थान हासिल गर्न सफल भएको थियो। उक्त अवसरमा नगद तथा प्रमाण पत्र पुरस्कारस्वरूप प्राप्त भएको थियो ।

## प्र.प्र.क. विशालनगरले गऱ्यो सरसफाइ

सिद्धाश्रम शक्ति केन्द्र प्रचार-प्रसार कक्ष विशालनगरले गत माघ ४ गते शनिबार स्थानीय धन विनायक मन्दिर परिसरमा सरसफाइ कार्यक्रम गरेको थियो । बिहान ८:०० बजेदेखि १०:०० बजेसम्म सञ्चालित उक्त सरसफाइको कार्यक्रममा कार्यकर्ताहरूको उल्लेख्य सहभागिता थियो ।

## बाह्रबिसेमा दोश्रो बार्षिकोत्सव, ध्यान कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय बाह्रबिसेले गत माघ १५ गते आफ्नो दोश्रो बार्षिकोत्सव विभिन्न कार्यक्रम गरि मनायो । जसमा शान्ति ऱ्याली, भजन-कीर्तन, नृत्य, प्रवचन/स्वचन आदि कार्यक्रमहरू रहेका थिए । भजनका लागि सिन्धुपाल्चोक जिल्लाका विभिन्न प्रचार प्रसार कक्षहरू तथा ललितपुर सम्पर्क कार्यालयका तर्फबाट भजन एवं नृत्य प्रस्तुत गरिएको थियो । कार्यक्रममा विभिन्न संघसंस्थाका प्रतिनिधिहरूको पनि उपस्थीति थियो । साथै उक्त दिनदेखि ध्यान कार्यक्रमको पनि शुभारम्भ भएको थियो ।


**प्राचीन गूढ विद्याहरूको प्रामाणिक प्रयोग र विशेष जानकारी प्राप्त गर्न सकिने विश्वको एक मात्र पत्रिका**

**'मंत्र-तंत्र-यंत्र विज्ञान'**

**खोजी खोजी पढौँ ।**


## मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी नेपालकै पहिलो रेडियो कार्यक्रम

# गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार बिहान ५:०५–५:४५ | माछापुच्छ्रे एफ एम | ९१ |
| चितवन | सोमबार बिहान ५:००–५:४० | कालिका एफ एम | ९५.२ |
| बनेपा | सोमबार बिहान ६:००–६:३० | मध्यपूर्व एफ एम | १०४ |
| सुर्खेत | सोमबार बिहान ५:१५–५:४५ | रेडियो भेरी एफ एम | ९८.६ |
| प्युठान | सोमबार बिहान ५:३०–६:०० | माण्डवी एफ एम | ९७ |
| गोरखा | सोमबार बिहान ५:००–५:३० | रेडियो गोरखा एफ एम | ९२.८ |
| भैरहवा | बिहीबार बिहान ५:००–५:४५ | रूपन्देही एफ एम | १०२ |
| दाङ घोराही | बिहीबार बिहान ५:३०–६:०० | रेडियो मध्यपश्चिम एफ एम | ९१.४ |
| पाल्पा | बिहीबार बिहान ५:००–५:३० | रेडियो मुक्तिनाथ एफ एम | ९०.८ |
| सिन्धुली | बिहीबार बिहान ५:००–५:३० | सिन्धुलीगढी एफ एम | १०३.६ |
| दाङ लमही | शुक्रबार बिहान ५:३०–६:०० | रेडियो देउखुरी एफ एम | १०५.८ |
| पोखरा | बिहीबार बिहान ५:३०–६:०० | रेडियो सराङ्कोट एफ एम | १०४.६ |
| दमौली | बिहीबार बिहान ५:२५–५:५५ | दमौली एफ एम | ९४.२ |
| कोहलपुर | बिहीबार बिहान ५:३०–६:०० | कोहलपुर एफ एम | १००.२ |
| सल्यान | बिहीबार बिहान ५:००–५:३० | रेडियो सल्यान एफ एम | १०१ |

## जानकारी

काठमाडौँ उपत्यकालगायत देशका विभिन्न भागमा रहेका एफ.एम. स्टेशनहरुबाट हरेक साता प्रसारण हुँदै आइरहेको मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी नेपालकै पहिलो रेडियो कार्यक्रम गोरक्ष निखिल सन्देशको प्रसारण विविध प्राविधिक कारणवश काठमाडौँ उपत्यकामा हाललाई स्थगित गरिएको जानकारी गराइन्छ । उपत्यकाबाहिरका अन्य स्थानहरुबाट भइरहेको प्रसारण भने सदाभैँ नियमितरुपमा नै हुनेछ । यसबाट श्रोतावर्गमा पर्न जाने असुविधाप्रति क्षमा याचना गर्दछौँ ।

# Gorakshya Nikhil Joyti Divya Vidyashram

A COMPLETE ENGLISH MEDIUM SCHOOL

ADMISSION OPEN

- सफलताको चार वर्षपछि अब पाँचौँ वर्षमा
- एउटा सम्पूर्ण विद्यालय, जहाँ तपाईँका बालबालिकाहरूले गुरुत्व शक्तिको साथ पाउनेछन्, शिवस्वरूप सद्गुरुदेवहरूको हात पाउनेछन्, आधुनिक आध्यात्मिक शिक्षाको आभास पाउनेछन् ।
- एउटा अद्वितीय विद्यालय, जहाँ तपाईँका बालबालिकाहरूले पुस्तक मात्र होइन, जीवन पढ्नेछन्, संस्कार पढ्नेछन् र व्यवहार पढ्नेछन् ।
- एउटा सम्पूर्ण सुविधायुक्त विद्यालय, जहाँ अत्याधुनिक शिक्षा प्रणालीका साथै विशेष आध्यात्मिक प्रविधिद्वारा पठनपाठन भइरहेको छ, बालबालिकाहरुको व्यक्तित्वको चौतर्फी विकास भइरहेको छ, जहाँका विद्यार्थीहरु अनुशासनका नमुना बनिरहेका छन् ।

महङ्गो स्कूलमा पढाएर, पुस्तकको भारी बोकाएर मात्रै राम्रो शिक्षा प्राप्त हुन्छ भन्ने तपाईंको सोच हुन सक्छ तर हामी भन्छौं, सही शिक्षा त त्यहाँबाट प्राप्त हुन्छ जहाँ शिक्षासँगै दीक्षा प्राप्त हुन्छ, जहाँ निःस्वार्थ सेवाभावले पठनपाठन हुन्छ, जहाँ व्यापार होइन व्यवहार पढाइन्छ, जहाँ प्रकार होइन संस्कार पढाइन्छ, जहाँ पुस्तक मात्र होइन जीवन पनि पढाइन्छ। बालबालिकाहरूको वास्तविक विकास तब मात्र हुन्छ जब आध्यात्मिक र आधुनिक शिक्षाको मेल हुन्छ, गुरु कृपा र आशीर्वादको मेल हुन्छ।

**HURRY UP !**

Admission open for **Limited Seats**
**Transportation Facility** available
**Special Package for Boarders**

PLAYGROUP TO CLASS VIII

Basundhara, Chakrapath, Kathmandu, Tel : 4355737

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**न गुरोराश्रमे कुर्यात्**
**दुष्पानं परिसर्पणम् ।**
**दीक्षा व्याख्या प्रभुत्वादि**
**गुरोराज्ञां न लङ्घयेत् ॥१४१॥**

भावार्थ : गुरु घर अथवा गुरु आश्रममा रहँदा शिष्यले कहिले पनि खान-पान तथा यता-उता भ्रमणमा समय खेर फाल्नु हुँदैन । कहिले पनि गुरु समान दीक्षा आदि दिने, व्याख्यान गर्ने तथा आफ्नो प्रभुताको प्रदर्शन गर्ने कार्य गर्नु हुँदैन किनकि यसो गर्नाले शिष्यभित्र अहङ्कार आउन थाल्छ । यस्तो ज्ञान उसका लागि अहितकर हुन्छ । यसले गर्दा ऊ आफ्नो ध्येयलाई चिन्नुको सट्टा यिनैमा आबद्ध भएर लक्ष्यभ्रष्ट हुन्छ ।

**नोपाश्रमं च पर्यङ्कं**
**न च पादप्रसारणम् ।**
**नांगभोगादिकं कुर्यान्**
**न लीला मपरामपि ॥१४२॥**

भावार्थ : गुरुका अगाडि कुनै खाट, कुर्सी, ओछ्यान आदि ओछ्याएर अग्लो स्थानमा बस्नु हुँदैन । यसो गर्नु उहाँको अपमान हो । उहाँका अगाडि खुट्टा तन्काएर बस्नु असभ्यता हो । तडक-भडकका लुगा लगाउनु, उबटन आदि लगाउनु तथा विलासिताका वस्तुहरूको उपयोग गर्नु, विशेष हाउभाउ प्रकट गर्नु यी सब गुरु आश्रमको मर्यादा विपरीत हुन् । यस्ता दुर्व्यसनहरूमा व्यस्त साधक कहिले पनि आध्यात्मिक मार्गबाट उँभो लाग्दैन ।

**अदत्तं न गुरोर्द्रव्यम्**
**उपभुञ्जीत कर्हिचित् ।**
**दत्तं च रंकवद्ग्राह्यं**
**प्राणोऽप्येतेन लभ्यते ॥१४३॥**

भावार्थ : गुरुले नदिउन्जेल उहाँको धनको कहिले पनि उपयोग गर्नु हुँदैन र उहाँले दिएपछि भिखारी समान विनम्र भएर त्यसलाई ग्रहण गर्नुपर्छ । यसो गर्नाले शिष्यमा आयु, बल र बुद्धिको वृद्धि हुन्छ । गुरुले नदिइकन कुनै पनि वस्तुको उपयोग गर्नु अहितकर हुन्छ । यसो गर्नाले शिष्यको बुद्धि मलीन तथा न्यून हुन जान्छ, फलस्वरूप ऊ निरन्तर पतनतर्फ अग्रसर भइरहन्छ ।

**गच्छतः पृष्ठतो गच्छेत्**
**गुरुच्छायां न लङ्घयेत् ।**
**नोल्बणं धारयेद्वेषं**
**नालंकारां स्ततोल्बणान् ॥१४४॥**

भावार्थ : गुरुले हिँडेको अवस्थामा उहाँको पछि-पछि हिँड्नुपर्छ, उहाँको छायाँलाई नाघ्नु हुँदैन । गुरु सदैव दिव्य भावभूमिमा अवस्थित हुनुहुन्छ, तसर्थ उहाँको पछि नै अनुकरण गर्नुपर्छ । उहाँका सामुन्ने तडक-भडक वेशभूषा तथा लोभ्याउने आभूषणहरू धारण गर्नु हुँदैन किनकि यसो गर्नाले विनम्रता सूचित हुँदैन अर्थात् सुसज्जित वस्त्र त लगाउनु पर्छ तर शिष्टताको प्रदर्शन नहुने वस्त्र लगाउनु हुँदैन ।

**गुरुनिन्दाकरं दृष्ट्वा**
**धावयेदथ वासयेत् ।**
**स्थानं वा तत्परित्याज्यं**
**जिह्वाछेदाक्षमो यदि ॥१४५॥**

भावार्थ : गुरु निन्दा गर्ने व्यक्तिलाई देखेर उसलाई बलपूर्वक हटाइदिनुपर्छ । यदि ऊसँग जुध्न सकिँदैन भने उसलाई तर्कले शान्त पार्नुपर्छ । यदि उसको कुरा काट्न सक्ने सामर्थ छैन भने स्वयं त्यस ठाउँबाट अन्यत्र जानुपर्छ । श्लोकको दोस्रो चरणमा वर्णित 'जिह्वाछेद'को अर्थ हो– उसको जिभ्रो काट्नुपर्छ, समयानुसार यस्तो गर्नु सम्भव छैन । यहाँ 'जिह्वाछेद'को तात्पर्यानुकूल प्रक्रिया यो हो कि उसलाई तर्कद्वारा शान्त गर्नुपर्छ ।

**नोच्छिष्टं कस्यचिद्देयं**
**गुरोराज्ञां न च त्यजेत् ।**
**कृत्स्नम् उच्छिष्टमादाय**
**हविर्वद् भक्षयेत् स्वयम् ॥१४६॥**

भावार्थ : गुरुको जुठो कुनै कुपात्रलाई दिनु हुँदैन । गुरुले खाएर बाँकी रहेको वस्तुलाई यज्ञको पवित्र प्रसाद सम्झेर शिष्यले आफै ग्रहण गरोस् । कहिले पनि गुरु-आज्ञाको उल्लङ्घन गर्नु हुँदैन अथवा त्यसको विकल्प खोज्नु हुँदैन । गुरुको शरीर तपस्यापूरित भएकोले पावनतम हुन्छ । अतः उहाँको प्रत्येक कार्य पवित्र हुन्छ । उहाँका वस्त्र, भोजन सबै दिव्य हुन्छन् । तसर्थ, बाँकी भोजनलाई पावनतम सम्झेर ग्रहण गर्नुपर्छ । जय गुरुदेव !

सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौं । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## धारण शक्तिः-

धारण शक्ति भन्नाले व्यक्तिले धान्न सक्ने शक्ति, आफूमा समाहित गर्न सक्ने शक्ति अथवा आफूमा लिन सक्ने भाव, आफूभित्र ग्रहण गर्न सक्ने भावनाको स्थितिलाई बुझिन्छ । मन्त्र साधनामा अगाडि बढ्ने साधक साधिकाहरूले धारणा शक्ति जति राम्रो भयो, त्यति नै छिटो प्राप्ति गर्न सक्दछन् । धारणा भन्ने बित्तिकै आफूले लिन सक्ने क्षमतालाई बुझिन्छ, आफूले ग्रहण गर्न सक्ने सामर्थ्यलाई बुझिन्छ । यसैले व्यक्तिको भावनाअनुसार, व्यक्तिको समर्पणअनुसार धारणा शक्ति कसैमा बढी हुन सक्छ, कसैमा कम हुन सक्छ । व्यक्तिअनुसार धारण शक्ति हुने गर्दछ । यही धारणा शक्तिको कारणबाट साधनामा सफलता छिटो र ढिलो हुन सक्दछ । त्यसैले जसको राम्रो धारणा शक्ति छ, उसले प्राप्ति पनि छिटो गर्दछ ।

व्यक्तिले गुरुलाई आफूमा कति धारण गर्न सक्छ, देवीदेवतालाई कति धारण गर्न सक्दछ, त्यहीअनुसार उसले प्राप्ति गर्ने हो । धेरैभन्दा धेरै ग्रहण गर्न सक्ने हुनलाई धारणा शक्ति बलियो बनाउनु पर्दछ । धारणा शक्तिको विकास गर्न भक्तिलाई जगाउनु पर्दछ । आफूलाई प्राप्त प्रत्येक कुरामा पूर्ण भक्ति हुनुपर्‍यो, पूर्ण श्रद्धा हुनुपर्‍यो । प्राप्त कुरालाई, निर्देशनलाई जति अक्षरशः पालना गर्दछौं, हृदयदेखि नै अर्थात् भित्रदेखि मान्दै जान्छौं, प्रत्येक कुरालाई होशियारीपूर्वक ध्यान दिएर मान्ने गर्छौं, धारणा शक्ति त्यति नै मजबुत हुँदै जान्छ । धारणा गर्ने क्षमताभित्र साधनाको सफलता लुकेको हुन्छ । भावना हुँदैमा वा साधना गर्दैमा, गुरुलाई मान्दैमा धारणा शक्ति राम्रो छ भन्न सकिँदैन । सामान्य व्यक्तिभित्र पनि असामान्य धारण शक्ति लुकेको हुन्छ । धारणाभित्रै सिद्धि, शक्ति, क्षमता, सामर्थ्य हुने गर्दछ । धारणाकै बलले दैवी शक्तिलाई आफूमा धारण गर्न सकिन्छ, धारणाकै बलले गुरुत्व शक्तिलाई धारण गर्न सकिन्छ, धारणाकै बलले दिव्यतम शक्तिहरूलाई आफूमा धारण गर्न सकिन्छ । त्यसैले दिव्यतालाई धारणाको माध्यमले ग्रहण गर्न सकिन्छ ।

गुरुबाट प्राप्त प्रत्येक निर्देशनलाई पूर्ण भावका साथ ग्रहण गर्न सक्ने बानीको विकास हामीले गर्नुपर्दछ । जे कुरामा पनि शङ्का, उपशङ्का, भ्रम, संदेह मात्र नलिई केवल आज्ञाकारिताको भाव विकास हुनुपर्दछ । शब्द-शब्दलाई पूर्ण श्रद्धाका साथ लिने, पूर्ण भावनाका साथ लिने कलाको विकास गर्नुपर्दछ । अत्यन्त संयमका साथ अगाडि बढ्नु पर्दछ । आफूलाई जति परिवर्तन गर्न सकिन्छ, त्यत्तिकै मात्रामा धारणा शक्ति बढ्दै जाने हो । आफ्नो अस्तित्वलाई नै मेटाएर दिव्य शक्ति, गुरुत्व शक्तिको धारणालाई नै आफ्नो अस्तित्व मान्ने क्षमताभित्र वास्तविक धारणा शक्ति लुकेको हुन्छ ।

यसैले आफ्नो धारण शक्तिलाई पूर्णरूपले विकास गरौं, आफूभित्रै दैवी शक्ति, गुरुत्व शक्तिलाई समाहित गरौं, साधनामा पूर्ण सफलता प्राप्त गरौं ।


## सुवर्ण अवसर

**गोरक्ष निखिल वाणी पत्रिका एउटा सम्पूर्ण पत्रिका भएकोले पाठक वर्गहरुको विशेष अनुरोधमा यसका पुराना अंकहरुलाई संकलन गरेर हरेक वर्षको भिन्दाभिन्दै बण्डल (बाइन्डिङसहित) विशेष छुटमा उपलब्ध गराइएको छ । यी अंकहरु सीमित मात्रामा (स्टक रहुञ्जेल सम्म) मात्रै उपलब्ध हुने भएकोले आजै आफ्नो प्रति सुरक्षित राख्नुहोला ।**

***मौकाको सदुपयोग गरौं ।***

***गोरक्ष निखिल वाणी खोजी खोजी पढौं ।।***

**सम्पर्क–केन्द्रीय कार्यालय वितरण कक्षमा दिउँसो २:०० बजेदेखि ६:०० बजेसम्म**

जाँदा जाँदै

# देशलाई सञ्जीवनी चाहिएको छ

जब कुनै पनि जीवले आफ्नो अन्तिम अवस्था पार गर्छ, तब उसलाई पुनर्जीवन दिन सञ्जीवनी विद्या वा चलनचल्तीको भाषामा सञ्जीवनी बूटी घोटेर खुवाउनुपर्छ भनेर बूढापाकाहरु भन्ने गर्दछन्। तर यो सञ्जीवनीको वास्तविक स्वरुप सायद कमैले देखेका वा अनुभव गरेका होलान्। तर जहाँ जहिले आपत विपत आइपर्छ त्यस्तो अवस्थामा कुनै अन्य कुराले त्राण दिन्छ अथवा जीवन दिन्छ भने त्यो कुरालाई पनि सञ्जीवनीसँगै तुलना गर्ने गरेको पाइन्छ। भन्नुको आशय सञ्जीवनी केवल बोट बिरुवामा मात्र सीमित छैन । यो त एउटा प्रत्येक क्षण प्रत्येक पल हरेकका लागि आवश्यक पर्ने तत्त्व हो। जान अन्जानमा हामीलाई प्रत्येक क्षण कुनै न कुनै कुराले सञ्जीवनीको काम गरिरहेको हुन्छ। चाहे त्यो घर व्यवहारमा होस् वा आध्यात्मिक जगत्मा नै। वर्तमान परिस्थितिलाई विश्लेषण गर्ने हो भने अब त यो सञ्जीवनी समग्र देशलाई नै आवश्यक भइसकेको छ। हामी नेपालीहरु दिन प्रतिदिन मृत्युतर्फ अग्रसर भइरहेका छौँ। शारीरिक स्वस्थता त छ तर मानसिक रुपमा भने हामी सबै अस्वस्थ छौँ। कहाँ कहिले के हुने हो, कसैले भन्न सक्तैन। आज सुध्रेला भोलि सुध्रेला भन्दाभन्दै स्थिति झन् जटिल बन्दै गइरहेको छ। राजनैतिक असन्तुलन, अस्तव्यस्त सामाजिक व्यवस्था, अनुशासनहीनता, सुशासनको अभावमा पिल्सिरहेको स्थितिमा सहजै देशलाई सही मार्गमा डोहोऱ्याउन सक्ने नेपाल आमाको वीर सन्तान कहिले जन्मेला र देशलाई सुव्यवस्थित पार्ला भनेर सबै बाटो हेरिरहेका छन्। धैर्यको पराकाष्ठामा पुगे पनि अझैसम्म तपाईँ हामीले धैर्य गुमाएका छैनौँ तर घडा भरिएपछि त्यो अवश्य पोखिन्छ। तसर्थ समयमै सचेत भएर अघि नबढ्ने हो भने त सायद हाम्रो परिणति पनि...... ।

यसै स्तम्भमा हामीले बारम्बार भन्दै आइरहेका छौँ अबको युग भनेको आध्यात्मिक युग हो जसको नाम गोरक्ष निखिल युग रहेको छ। हामी सबैका प्राणाधार श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजद्वारा शंखघोष भएको यो स्वर्णिम युग अवश्यम्भावी छ। वर्तमान परिस्थितिहरु त केवल कारक मात्र हुन्, कारण त आउने समयले बताउनेछ। सचेत गराउनु हाम्रो धर्म हो। प्रत्येक मानवलाई गुरु मार्गमा जोड्दै नवयुगका लागि तयार पार्नु हाम्रो कर्तव्य हो। हामी हाम्रो धर्म र कर्तव्यप्रति निष्ठावान् छौँ। तसर्थ फेरि पनि भनिरहेका छौँ यो सबै परिस्थितिको सञ्जीवनी केवल श्री श्री महायोगी गुरु गोरखनाथलाई खुशी बनाउनु नै हो। उहाँको खुशीबिना यो राष्ट्रको कल्याण न हिजो भएको थियो, न आज भएको छ र न भोलि नै हुनेछ। यो सञ्जीवनीलाई बुझेर उहाँप्रतिको भक्तिभाव बढाउँदै समग्र राष्ट्रले नै उहाँलाई खुशी बनाउनेतर्फ नसोची केवल भौतिक कारणलाई मात्र आधार बनाएर स्थिति सम्हाल्न खोज्नु भनेको दिवास्वप्नमा हराउनुजस्तै हो। युग भौतिक छ भन्दैमा देवी देवता एवं गुरुहरुको सूक्ष्म अस्तित्व नै छैन भन्ठान्ने भूल राष्ट्रले नगरोस्। यो त शुरुआत मात्र हो। यदि यस्तै परिस्थिति रहने हो भने अझ कति दुःख, कष्ट झेल्नुपर्ने हो, त्यो त भविष्यकै गर्भमा छ।

जो आए पनि किन स्थिति सम्हालिन सकिरहेका छैन? किन हामी नेपालीहरुले शान्तिको सास फेर्न पाइरहेका छैनौँ? किन विश्वबाटै अपहेलित हुँदैछौँ? इतिहासदेखि नै पराधीन हुनु नपरेको हाम्रो देशले अहिले किन भीख मागेर जनता पाल्दैछ? किन मानसिक दासत्व ग्रहण गरेर अरु देशले चाहेजस्तो बन्न खोज्दैछ? नेपाल र नेपालीले चाहेको कुरा नेपालमा लागु किन हुन सक्तैन? सत्तामा पुगेपछि किन सबै उस्तै बनिरहेका छन्? पद, प्रतिष्ठा र पैसाको लागि राष्ट्रियतालाई समेत किन दाउमा लगाइँदैछ? यी सबै प्रश्नहरुको उत्तर केवल भौतिक परिस्थितिबाट मात्र दिन सम्भव छैन। यसका पछाडि आध्यात्मिक कारण पनि रहेको छ जसको समाधानबिना भौतिक परिस्थितिमा कुनै सुधार आउनेवाला छैन। जग नबनाईकन छाना मात्र टालेर कुनै अर्थ छैन। त्यसैले सद्गुरुरुपी सञ्जीवनी बूटीको प्रयोग नै आजको विषम परिस्थितिको समाधान हो। अस्तु!